# नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वर

# NEPAL'S FOUR FAMOUS KARUNAMAYA LOKESWOR






मुनीन्द्ररत्न वज्राचार्य

MUNINDRA RATNA BAJRACHARYA

# नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वर
# NEPAL'S FOUR FAMOUS KARUNAMAYA LOKESWOR


लेखक

मुनीन्द्ररत्न वज्राचार्य

Munindra Ratna Bajracharya



प्रकाशकः

प्रमोदहर्ष वज्राचार्य

तक्षबहाल, काठमाडौं

*Publisher*

***Promod Harsha Bajracharya***

Tachhya Bahal, Kathmandu


रवि शाक्य

इखाछेँ, यल

प्रकाशकः प्रमोदहर्ष बज्राचार्य
तक्षबहाल, काठमाडौं
नेपाल ।



प्रकाशितः वि.सं. २०५८ माघ
ने.सं. ११२२
ई.सं. २००२

संख्याः १०००

मूल्यः रू. ५०।-

मुद्रणः शुभकामना प्रिन्टिग प्रेस
मासंगल्लि, काठमाडौं
फोनः २३२१२४

कम्प्युटर सेटिङ्गः दिनेश मानन्धर

# विषय-सूची

**सृष्टिकान्त लोकेश्वर**



**आर्यावलोकितेश्वर (सेतो मच्छेन्द्रनाथ)**

# दुई शब्द

श्री मुनीन्द्ररत्न वज्राचार्यले लेख्नु भएको नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वर नामको पुस्तक प्रकाशित हुन लागेकोमा यस सेन्टरलाई खुशी लागेको छ। नेपालको बौद्ध जगतमा अति लोकप्रिय करुणाको प्रतीक मानिने करुणामयलाई श्री आर्यावलोकितेश्वर, लोकनाथ, लोकेश्वर, पद्मपाणी, बोधिसत्व आदि विविध नामले चिनिन्छ।

नेपालमा बुद्धधर्म, बौद्ध संस्कृति र कलाको संरक्षण र संवर्द्धन गर्ने उद्देश्यले कार्य गर्दै आएको लोटस रिसर्च सेन्टरले आज भन्दा चार वर्ष अघि श्री मुनीन्द्ररत्न वज्राचार्यबाट नेपालमण्डलको बौद्ध संस्कृतिमा करुणामय जात्रा विषयमा अध्ययन अनुसन्धान गराइ एउटा कार्यपत्र तयार गर्ने काम भएको थियो। सो कार्यपत्रलाई सेन्टरले २०५५ सालमा यो सेन्टर र विभिन्न १८ वटा संस्थाहरुको संयुक्त आयोजनामा राष्ट्रिय सभागृहमा पाँच दिनसम्म संचालन भई सफलतापूर्वक सम्पन्न भएको "नेपालमण्डलको बौद्ध संस्कृति सम्मेलन" (Conference on Buddhist Heritage of Nepalmandal) मा नेपालका अतिरिक्त विभिन्न देशका विद्वान जोन के. लकले टिप्पणी गर्नुभएको थियो। यस कार्यपत्रलाई नेपालमण्डलको बौद्ध संस्कृति सम्मेलनको प्रतिवेदन सहित समावेश गरी पुस्तककारको रुपमा पनि प्रकाशित भइसकेको छ। त्यसै कार्यपत्रलाई छुट्टै पुस्तकको रुपमा प्रकाशन गर्नको लागि वहाँको अनुरोध बमोजिम यस सेन्टरले सहमति प्रदान गरेको थियो। नेपालभाषामा लेखिएको यस कार्यपत्रको लेखक आफैले नेपालीमा उल्था गरी काठमाडौं तक्षबहालका श्री प्रमोदहर्ष वज्राचार्यबाट प्रकाशनको व्यवस्था भएकोमा श्री मुनीन्द्ररत्न वज्राचार्यप्रति यस सेन्टर बधाई ज्ञापन गर्दछ र प्रकाशकलाई पनि यस सेन्टरको तर्फबाट धन्यवाद छ।

नेपालमण्डल (काठमाडौं उपत्यका) को संस्कृतिमा करुणामयको विशेष महत्व रहेको छ। करुणामय भन्नाले प्राणीहरुमाथि करुणा राखी दु:खबाट मुक्ति

दिइ उद्धार गर्ने बोधिसत्वको रुपमा चिनिन्छ । यस उपत्यकालाई रक्षा गर्नको लागि चारै दिशामा चारै लोकेश्वर विराजमान गरिएको छ । यी लोकेश्वरहरुमा काठमाडौंको आर्यावलोकितेश्वर (अमोघपाश लोकेश्वर), ललितपुरको पद्मपाणि लोकेश्वर, चोभारको आनन्दादी लोकेश्वर र बनेपा नालाको श्रृष्टिकान्ता लोकेश्वर हुन् । ती स्थानहरुमा वर्षेनी करुणामयको जात्रा बडो धुमधामले मनाउने प्रचलन छ । करुणामय जात्रामा राजा समेत सवारी हुने भएकोले पनि करुणामयको महत्व झन बढेको छ । जातपातको भेदभाव बिना बौद्ध तथा हिन्दू सबैले त्यतिकै श्रद्धा भक्तिले मान्ने करुणामय नेपालमा धार्मिक समन्वयको प्रतीक बनेको छ ।

श्री मुनीन्द्ररत्न वज्राचार्यले अन्वेषण गरी तयार पार्नुभएको यस पुस्तकको प्रकाशनबाट काठमाडौं उपत्यकाको करुणामय संस्कृति बारेमा प्रचारप्रसार हुन गई नेपालको संस्कृति संरक्षण र संवर्द्धनमा टेवा पुग्नेछ भन्ने आशा गरिएको छ । साथै यस पुस्तकले करुणामय सम्बन्धमा पछि पछि अध्ययन अनुसन्धान गर्ने अन्वेषकहरुको लागि धेरै सहयोग मिल्न जाने विश्वास गरिएको छ ।

**लोटस रिसर्च सेन्टर**
महापाल, ललितपुर

दिनांक : २०५८ माघ २५ गते ।

# मन्तव्य

त्रिभुवन विश्वविद्यालयका उप-प्राध्यापक श्री मुनीन्द्ररत्न बज्राचार्यले लेख्नु भएको नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वर शीर्षकको पुस्तक मैले चाख मानेर पढें । यसमा नेपालस्थित चार प्रसिद्ध करुणामय लोकेश्वरको छोटो परिचयका साथै ती संग सम्बन्धित जात्रा, उत्पति आदिको विवरण दिने प्रयत्न गरिएको छ । नेपालमा करुणामय पुजनको आफ्नै पुजा अर्चना गर्छन् भने दोश्रो, यी चार करुणामय मध्ये एक (रातो मच्छेन्द्रनाथ) को जात्रालाई राष्ट्रिय मान्यता पनि प्राप्त छ ।

हुनत रातो र सेतो मच्छेन्द्रनाथका बारे केही पुस्तकहरु प्रकाशित भएका छन् र अन्य दुई करुणामय (आदिनाथ र सृष्टिकान्त) लोकेश्वरका बारेमा पनि केही लेखहरु बाहिर आइसकेका छन् तापनि प्रस्तुत पुस्तकका लेखक वज्राचार्य परिवारको भएको र वज्राचार्य नै लोकेश्वरका पुजारी हुने भएको हुँदा अन्य लेखकहरुले दिन नसकेका तथ्य यस पुस्तकमा उपलब्ध हुने विश्वास लिएको छु ।

नेपाल मण्डलको बौद्ध सम्मेलनका लागि नेपाल भाषामा तयार गरिएको सेमिनार पत्रले पुस्तकको रुप लिएकोमा लेखकलाई बधाई ज्ञापन गर्दै भविष्यमा लेखकले करुणामय लोकेश्वरबारे गहन शोधकार्य गरी नेपाली वाङ्मयलाई सजाउनु हुनेछ भने आशा गर्दछु ।

**डा. त्रिरत्न मानन्धर**
प्राध्यापक तथा डीन
मानविकी र सामाजिकशास्त्र संकाय
त्रि. वि. कीर्तिपुर

# कृतज्ञता

परापूर्वकालदेखि नै धार्मिक आस्थाले ओतप्रोत यस पुण्यभूमि नेपालका सर्वसत्व प्राणीहरुको कल्याणका लागि विभिन्न करुणामय लोकेश्वरहरुको उत्पत्ति भएको थियो । सत्ययुगमा सुखावती भूवनबाट मर्त्यमण्डलमा अनेकौं करुणामय लोकेश्वरहरुको आगमन भई यहाँका मानव जातिको उद्धार गरेका थिए । ती करुणामय लोकेश्वरहरुमध्ये चार प्रसिद्ध करुणामय लोकेश्वरहरु जस्तै रक्तावलोकितेश्वर (रातो मच्छेन्द्रनाथ), आनन्दादि लोकेश्वर (आदिनाथ), सृष्टिकान्त लोकेश्वर (नाला करुणामय) र आर्यावलोकितेश्वर (सेतो मच्छेन्द्रनाथ) हरुलाई विशेष महत्व दिई जात्रा पर्वहरु मनाउँदै आएका छन् । यी चार करुणामयहरुमध्ये काठमाडौंको सेतो मच्छेन्द्रनाथको रथ यात्रामा गुरुजुको पल्टन सामेल हुनुपर्ने र श्री ५ महाराजाधिराजको खड्ग रथमा राखी जात्रा चलाउनु पर्ने तथा ललितपुरको रातो मच्छेन्द्रनाथको रथ यात्राको भोटो जात्राको दिन राष्ट्राध्यक्ष श्री ५ महाराजाधिराजको सवारी हुने भएकोले करुणामयका जात्राहरु राष्ट्रिय गौरवमय धार्मिक परम्परामा गनिन्छ । भोटो जात्राको दिन सार्वजनिक बिदा समेत हुन्छ ।

बौद्ध र हिन्दू धर्मावलम्बीहरुले समान रुपले पूजिएका करुणा र आनन्दका मूर्ति करुणामयहरुको विषयमा जानकारी राख्नु नेपालीहरुको लागि आवश्यक नै देखिन्छ । नेपाली जनमानसमा धार्मिक सहिष्णुता जगाउन र सांस्कृतिक परम्परा जीवित राख्न यी चार प्रसिद्ध करुणामय लोकेश्वरहरुको सम्बन्धमा संक्षिप्त परिचय दिने उद्देश्यले अभिप्रेरित भई यो पुस्तक तयार गरिएको हो । यस पुस्तकको अध्ययनले नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वरहरुको विषयमा संक्षिप्त रुपमा भएपनि ज्ञान हासिल गर्न मद्दत मिल्नेछ भने आशा लिएको छुं ।

प्रस्तुत पुस्तक लेख्न सर्वप्रथम लोटस रिसर्च सेन्टरप्रति आभार प्रकट गर्दछु । यस सेन्टरले 'नेपाल मण्डलको बौद्ध सम्मेलन' का लागि नेपाल भाषामा

लेखाएको सेमिनार पत्रलाई परिमार्जित गरी नेपाली भाषामा अनुवाद गरी पुस्तकको रुप दिएको छुं। अधिकांश पाठकहरुले बुझ्न सकोस र पाठ्यपुस्तकको रुपमा विद्यार्थीहरुले अध्ययन गर्न सजिलो होस् भन्ने धारणा लिइ यस पुस्तकमा यथासम्भव सरल भाषा प्रयोग गरेको छ।

यस पुस्तकको लागि कृपापूर्वक भूमिका र मन्तब्य लेखि दिनु हुने श्रद्धेय विद्वत महानुभावहरु र प्राध्यापक लोटस रिसर्च सेन्टर तथा डीन डा. त्रिरत्न मानन्धर प्रति म कृतज्ञता ज्ञापन गर्न चाहन्छु। अन्तमा यसलाई पुस्तकको रुपमा प्रकाशनार्थ जिम्मेवारी लिनु हुने श्री प्रमोदहर्ष बज्राचार्यलाई मुरी-मुरी धन्यवाद दिन चाहन्छु। साथै यस पुस्तकमा कमी कमजोरी र त्रुटिहरु भएमा सो औंल्याइ दिनु भई सुझाव दिनु हुनका लागि सहृदय पाठकवर्गमा बिनम्र अनुरोध गर्दछु।

जय करुणामय लोकेश्वर !

मुनीन्द्ररत्न बज्राचार्य

# नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वरहरूको परिचय

## १. नेपालको बौद्ध संस्कृतिः

कुनै पनि जनजातिले आ–आफ्नो संस्कृतिलाई विकास गर्दै लगेको हुन्छ। संस्कृति भन्नाले कुनै पनि भूभागमा बस्ने मानिसको जनजीवनमा खास खास विधि व्यवहार मूल्य, मान्यता, विश्वास, परम्परा र धारणामा घनिष्ट सम्बन्ध रहेको हुन्छ । उक्त संस्कृतिलाई आ–आफ्नो वास स्थानमा रहेको वातावरण अनुसार त्यसलाई प्रयोग गर्दै लगेको हुन्छ । जहाँसम्म आफूहरु एकताबद्ध हुनुको मुल आधार नै यस्तो संस्कृतिको प्रतिपालन गर्दै लैजानु हो। यस्तो संस्कृतिले आफ्नो देशमा विभिन्न क्षेत्र जस्तो सामाजिक, आर्थिक, भौगोलिक र राजनैतिक क्षेत्रमा पनि प्रभाव पारेको हुन्छ । यसबाट राज्यको सभ्यता र विकासको आधार पनि बुझ्न सकिन्छ । यस्तो संस्कृतिको कुरालाई अगाडि सम्झन्दा नेपालको संस्कृतिले विश्व सामू निकै प्रसिद्धि पाएको छ। नेपाल अधिराज्यभर यहाँको संस्कृतिलाई जाज्वल्यमान गर्ने समूहमा काठमाडौं उपत्यकाका नेवार जातिहरु अगाडि आउँछन्। नेवार समाजमा बौद्ध संस्कृतिले निकै ख्याति प्राप्त गरेको छ।

नेपालका नेवारहरु आदिवासी हुन्। यिनीहरुको बसोबास नेपालमण्डलमा भएको छ। प्राचीनकालमा यो नेपाल मण्डलको भूमिमा चारैतिर गोलाकार भई पर्वत श्रृंखलामा सुरक्षित र सुरम्य भएको थियो । बाह्रवटा प्रमुख तीर्थ स्थलको पानी जम्मा भई नदीहरुद्वारा सिंचित हुन गई पवित्र रहन गएको एक भूमि हो । नेपालको उत्पत्तिकाल देखि यहाँ बौद्ध संस्कृतिको विस्तारै विकास हुँदै आएको कुरा स्वयम्भू पुराणमा उल्लेख छ ।

परापूर्वकालमा यो नेपाल मण्डल जलमग्न भई रहेको अवस्थामा विपस्वी तथागतले रोपेका हजारवटा कमलको फूलमाथि स्वयम्भू धर्मधातु ज्योतिरुपको उत्पत्ति भयो। उक्त ज्योति रुप ज्ञानको उत्पत्ति भएपछि महाचीनको पंचशीर्ष पर्वतबाट महामञ्जुश्रीको नेपाल आगमन भई उनले चारै दिशामा पानी विस्थापित गरी मानिसहरु बस्न योग्य भूमि बनाए।[1] महामञ्जुश्रीले खगानना देवी नैरात्मा गुह्येश्वरी माताको दर्शन गर्नु भई तुरुन्तै 'षोडशभुज' र 'श्रीहेवज्र नैरात्मा' (नैराला) जस्ता दुई चर्यागीत रचिई गाउनु

भएको थियो। यो देश मञ्जुश्रीको प्रभावबाट सृष्टि भएकोले यसलाई 'मञ्जुपतन' भनी भन्ने गरेको छ।[२]

स्वयम्भू धर्मधातु ज्योतिरुप उत्पत्ति भएपछि विभिन्न बुद्धहरुको नेपाल भ्रमण हुन गएको थियो। नेपाल भित्र आगमन भएका बुद्धहरुमा दीपंकर तथागत, विपस्वी, विश्वभू, क्रकुच्छन्द, शिखी आदि हुन। यस पवित्र भूमिमा धेरै विद्वानहरुको पनि आगमन भएको थियो। नेपाल आउने क्रममा बंगाल गौड देशका राजा प्रचण्ड देव काश्यप बुद्धको धर्मोपदेश सुनेर आफ्नो सबै परिवार सहित स्वयम्भू ज्योतिरुपको दर्शन गर्न आएका थिए। प्रचण्ड देव राजाले मञ्जुदेवाचार्यका शिष्य गुणाकराचार्यबाट भिक्षुत्व ग्रहण गरी बज्राभिषेक लिई शान्तश्री अर्थात शान्तिकराचार्य भए। उनले स्वयम्भू महाचैत्यको प्रतिस्थापन गरेका थिए। साथै अग्निपुर, वायुपुर, नागपुर (पातालपुर), वसुपुर र शान्तिपुरको आगम पनि संस्थापना गरे। उनले वज्रयान बौद्ध धर्मको संस्कार, संस्कृति र क्रियाकर्मको निकै विकास गरे। यस बेलादेखि नेवार बौद्ध संस्कृति र परम्परा अनुरुप यहाँको समाज अघि बढ्यो।[३]

नेपालको प्राचीनतम संस्कृतिमा बौद्ध संस्कृति पनि एक प्रमुख रहेको छ। आज सम्म नेवारहरुले बौद्ध संस्कृतिलाई मान्दै आएका छन्। वास्तवमा यो बौद्ध संस्कृतिको उपज र उद्‌गमस्थल नेपालको भूमि नै मान्नु पर्दछ। यसकारण यो नेवार बौद्ध संस्कृतिलाई विश्वको प्राचीनतम संस्कृति मध्येमा एक हो भनी भन्दछन्।[४] नेवार जातिले प्राचीनकाल देखि नै आफ्ना जनजीवन पद्धति बौद्ध संस्कृति अनुसार परिस्कृत गर्दै विकास गरेको छ। महायान धर्म अनुसार मनुष्य जीवनको मूल्य नै बोधिसत्वको आदर्शप्राप्त गर्नु हो। जगतको लागि प्राणी मात्रको करुणाले ओतप्रोत गरी अर्काको दु:ख सम्झी आफूले सक्दो सम्पूर्ण प्राणीको हित गरी क्रमश: सुखको मार्गमा जानु बोधिसत्वको चर्या हो। यस्तो यथार्थ ज्ञान लिनेहरु बोधिसत्वहरु हुन्। बोधिसत्वको उत्पत्ति सम्बन्धमा धेरै ग्रन्थहरुमा उलेख भएका छन्।

पं. निष्ठानन्द बज्राचार्यद्वारा अनुवादित 'ललितविस्तर सूत्र' नामको महायानी बृहद ग्रन्थमा उल्लेखित विषय 'महेश्वरादि देव समुत्पादन' भन्ने कुरामा विष्कर्म्मा नामको बोधिसत्वले भगवान बुद्ध संग संसारको सृष्टिको सम्बन्ध जान्ने इच्छा गर्दा विपस्वी तथागतले उनलाई यस प्रकारको कथा आज्ञा भएको छ।

"पहिले पहिले शुरुमा महाशून्य भइरहेको अवस्थामा उही शून्यबाट निरञ्जन निराकार बुद्ध अभिताभ तथागत ज्योतिरुप भई उत्पत्ति भयो। सत्व, रज र तम भन्ने

तीन गुण धारण गर्ने विश्वरुप भई उहाँ ज्योतिरुप बुद्ध ईश्वर आदिनाथ श्री स्वयम्भू ( आफै उत्पत्ति हुने) महाबुद्ध अभिताभ तथागतद्वारा सबै लोकको अधिपति ईश्वर लोकनाथ श्री करुणामयको उत्पत्ति हुने गयो। फेरि करुणामय लोकनाथको दुई नेत्रबाट चन्द्र, सूर्य, कपालबाट श्री महादेब, काँधबाट दुई अनुहारको ब्रम्हा, हृदयबाट नारायण, दाँतबाट सरस्वती, मुखबाट वायुदेव, पैतालाबाट पृथ्वीमाता, पेटबाट लक्ष्मी वरुण, जलदेवता, नाइटोबाट अग्नि देवता, देब्रे गोडाबाट लक्ष्मी, दाहिने गोडाबाट कुबेरको उत्पत्ति भयो । यसरी नै धेरै अरु देव देवीहरुको उत्पत्ति भयो ।"[५]

यस संसारमा रहेका समस्त प्राणीको दु:ख निवारणका लागि लोकको उद्धारको निमित्त लाकेश्वरहरुको सृष्टि भएको हो। लोकेश्वरहरुलाई करुणामय र अवलोकितेश्वर पनि भन्ने गरिन्छ । यिनीहरुको कुशल शक्तिद्वारा भवसागर तर्नको लागि थरीथरीका देवदेवी र तारागण आदिको सृष्टि भएको हो। नेपालको प्राचीन ग्रन्थ गुण कारण्ड ब्यूह सूत्र अनुसार संसारका प्रतिपालक नै महाबुद्ध आदिबुद्धको रुपमा लोकेश्वरलाई लिने गरेको छ। समय सयममा विभिन्न लोकेश्वरको सृष्टि हुने क्रममा १०८ लोकेश्वरहरुको सृष्टि हुन गएको हो। नेपालको पवित्र भूमिमा लोकेश्वरको स्थान र महिमा अपरम्पार मानिएको छ । जगत सत्व प्राणीको हित, सुख शान्ति र समृद्धिका लागि देशकाल परिस्थिति अनुरुप सर्वसत्व प्राणीको उद्धार कामना गर्दै थरी थरीको अवतार लिंदै करुणामय लोकेश्वरको सृष्टि हुने क्रममा यहाँ ३६० लोकेश्वरहरुको पनि सृष्टि हुन गएको छ।

नेपालमा परापूर्वकाल देखि मानेर आएका लोकेश्वरहरु मध्ये ४ वटा लोकेश्वरहरुको (करुणामयहरु) निकै महत्वपूर्ण छन्। यी ४ करुणामय लोकेश्वरहरु यस प्रकार छन् :

१. **अमरापुरी बुँगमदेश – ललितपुरका रक्तावलोकितेश्वर**
   **(रातो मच्छेन्द्रनाथ, लोकनाथ, बुँगद्यो)**

२. **कच्छपाल पर्वतका आनन्दादि लोकेश्वर**
   **(आदिनाथ, चोभाःद्यो)**

३. **नालादेश (नालागिरी) का सृष्टिकान्त लोकेश्वर**
   **(नाला करुणामय)**

४. **काठमाडौंका आर्यावोलोकितेश्वर**
   **(सेतो मच्छेन्द्रनाथ, जनबाःद्यो)**

यी चार करुणामय लोकेश्वरको विशेष गुणमा नालाका करुणामयलाई सृष्टिकर्ताको रुपमा लिइन्छ भने सृष्टि भएका प्राणीको रक्षाका लागि अन्नधन्न अनाजको व्यवस्था गर्न, वृष्टि गर्ने ईश्वरका रुपमा रक्तावलोकितेश्वर लोकनाथ बुँगद्योलाई मानिन्छ। यस्तै ग्रह दशा भय रोग विघ्न बाधाबाट मुक्त गर्न आनन्दादि लोकेश्वर आदिनाथलाई लिइन्छ। त्यस्तै आयु साधनागरी आयुबृद्धि गर्नमा आर्यावलोकितेश्वर सेतो मच्छेन्द्रनाथ (जनबाहाद्यो) लाई सम्झने गर्दछन्। नेवार बौद्ध संस्कृति यी प्रमुख चार करुणामयलाई विशेष मान्यताका साथ मनाउने गरेका छन्। आजसम्म पनि यी करुणामयहरुको सम्झनामा आराधना गर्ने, पूजापाठ धर्मकर्म व्रतादि बस्ने नित्य सुमरण श्रद्धाभाव राख्ने जस्ता कामले नेपालको संस्कृतिलाई जाज्वल्यमान गर्दै आएका छन्। लामो आयुका लागि अकाल मृत्युभयबाट टाढा रहन, धन धान्य परिपूर्ण हुन मनोवाञ्छित कार्यसिद्धि आदि फल प्राप्त गर्न अनेक धर्मकर्म गर्दै आएका छन्। यस्तो अवस्था सिर्जना गर्नका लागि नै काठमाडौं उपत्यकाका नेवार बौद्ध समुदाय र अन्य भक्तजनहरुले लोकनाथ, आदिनाथ, नाला करुणामय र सेतोमच्छेन्द्रनाथ आदि करुणामयको दर्शन गरी महिना महिनामा अष्टमी उपोषध व्रत बसी सप्त विधानोत्तर सत्वपूजा गरी पटाका (पता:) ध्वजा चढाई धर्मकर्म गर्दै आएका छन्। पाटनका रातो मच्छेन्द्रनाथ र काठमाडौंको सेतो मच्छेन्द्रनाथ दुवैको रथ बनाई तानी धुमधामले शहर परिक्रमा गरी जात्रा मनाउँदछन्। तर चोभारको आदिनाथ र नालाको नाला करुणामयको खटमा राखी जात्रा गरिन्छ। नेपालीहरु पहिलेदेखि धर्ममा श्रद्धा राख्ने हुँदा धर्मको संरक्षण र सम्बर्धनका लागि करुणामय लोकेश्वर आदिको जात्रा विभिन्न मान्यताका साथ मानिदै आएका छन्। यस्ता किसिमका जात्रा बौद्ध र हिन्दू धर्मको भेदभाव नराखी बढो धार्मिक सहिष्णुताको आधारमा सद्भावना राखी जात्रा मनाउँदै आएका छन्। अझ महायानी बौद्ध धर्महरुमा समन्वयवादी नीति देखाउँदै आएका धेरै उदाहरण देख्न सकिन्छ। तैपनि नेपालमा चल्दै आएका जात्राहरुमा बौद्ध जात्रा माथि धार्मिक समन्वय ल्याउन निर्वाधरुपमा प्रयास गरिए तापनि विभिन्न कारणले वर्तमान स्थितिमा धार्मिक र सांस्कृतिक क्षेत्रमा अतिक्रमण गर्ने प्रचलन आउने गरेको छ। राजनैतिक शक्तिको उथलपुथल, वाहिरी मानिसको आप्रवास, स्थानीय मानिसहरुको बसाई, सराई, आर्थिक समस्या जस्ता समस्याहरुले गर्दा नेपालका जात्राहरु धमाधम मासिदै गएका छन्। विभिन्न धर्महरुको आगमनले गर्दा आफ्ना परम्परानुगत धर्म अनुसारका जात्राहरु अतिक्रमण भई दिनाले आफ्नो मौलिक संस्कृतिको संरक्षण र सम्बर्द्धन गर्न निकै कठिन हुँदै आएको छ।

## २. लोकेश्वरको जात्रा उत्पत्तिः

यो संसारमा बस्ने सम्पूर्ण प्राणीको दु:ख निवारण र लोक उद्धारका लागि लोकेश्वरहरुको उत्पत्ति भएको हो । नेपालमा लोकश्वर प्रति अति श्रद्धा राखी मान्दै आएका छन् । लोकेश्वरको सृष्टि नै संसारका सबै प्राणीको हित सुख गर्न र धर्म उपदेश दिनका लागि हो । नेपालका प्राचीन ग्रन्थ 'नव व्याकरण' मा अनेक बोधिसत्वहरुको विषयमा उल्लेख गरिएको छ । त्यस्तै नेपालको अर्को प्राचीन ग्रन्थ 'गुणकारण्ड व्यूह सुत्र' अनुसार संसारका प्रतिपालक महाबुद्ध आदिबुद्धको रुपमा करुणामय लोकश्वरलाई लिएका छन् ।

आर्य गुण कारण्ड ब्यूह सूत्रमा करुणामय लोकेश्वरको अनेक लोकको उद्धारको कथा वर्णन गरिएको छ । करुणामयद्वारा नरकमा रहेका पीडित प्राणीहरुको उद्धार गरी सकेपछि त्यहाँबाट प्रेत लोकमा जानुहुन्छ प्रेत लोकमा भोक प्यासले दु:ख भोगिरहेका असंख्य प्रेतहरुको उद्धार गर्नु हुन्छ । करुणामय लोकेश्वरले सम्पूर्ण प्रेत गणलाई आफ्नै हातबाट अम्मल बनाई सन्तुष्ट हुने गरी ख्वाई भोकप्यास मेटाई त्रिशरण गमन गराउनु हुन्छ । कारण्ड ब्यूह सूत्रको धर्मदेशना गर्नु हुन्छ । उक्त सूत्र सुनेर प्रेतगणका प्रेतहरु संसारको दु:ख प्रति वैराग चित्त भई बोधिचित्तोपाद हुन्छ । यस्ता प्रकारले यस नेपाल मण्डलमा अनेक अवलोकितेश्वरहरु आउनु भई धेरै पापीजनहरुलाई उद्धार गरी कल्याण गर्ने काम गरिएको वर्णन ठाउँ ठाउँमा उल्लेख छ ।[७]

नेपाल मण्डलको पूण्यभूमिमा बागमती नदी र अमोघ फलदायिनी नदीको संगममा शोधन नामको एक तीर्थ छ । त्यस तीर्थमा गोकर्ण नामको राजकुमार आर्यावलोकतेश्वरको स्मरण गरी षडक्षरी मंत्रको जप गर्दै त्रिरत्नको शरण गई उपोषध व्रत बसी तीर्थसेवा गर्ने गर्थे । त्यसबेला सुखावती भूवनबाट आउनु भएको श्री आर्यावलोकितेश्वरले लोक समाधि बुझि गोकर्ण राजकुमारलाई भन्नु भयो 'तिम्रो पिता बृषकर्ण पूर्वजन्ममा पापको दोषको कारण नरकमा परेको थियो । गगनजंगले अगतिमा परेका बृषकर्णलाई उद्धार गर्न प्रत्येक अष्टमीका दिन उपोषध व्रत धारणा गरी श्री करुणामयको भजन कीर्तन गर्न भनी राजकुमार गोकर्णलाई भन्नु भयो । त्यसै दिन देखि उक्त तीर्थमा राजकुमार ब्रत बसी धर्मकर्म गरे । त्यसपछि गगनलिङ्गेश्वर वा गोकर्णेश्वर नामले प्रख्यात हुन गयो । त्यसैले सधैं श्रावण मासको कृष्ण पक्ष आमावसीका दिन गोकर्ण तीर्थमा उपोषध व्रत बसी त्रिरत्नको शरणमा गएमा सुखावती भूवनबासमा बास मिल्दछ भनी भनिएको छ ।[८] यसरी आर्यावलोकितेश्वर करुणामयको उत्पत्ति विषयमा धेरै पौराणिक कथाहरु छन् ।

पौराणिक कालमा मात्र होइन नेपालको प्राचीनकालको इतिहासको शुरुवातदेखि नै लोकेश्वरको परिकल्पना गर्दै आएको छ । प्राचीन नेपालमा हिन्दू र बौद्ध धर्ममा लोकेश्वरहरुले विशिष्ट रुपमा ठाउँ ओगटेका छन् । धेरैजसो किराती राजाहरु बौद्ध धर्मावलम्बी भएकाले लोकेश्वरको भावभक्ति गर्दै आएका थिए ।

लिच्छविकाल आएपछि बौद्ध धर्मको धेरै विकास भएको छ । बौद्ध धर्म मान्नेहरुले आफ्नो धर्म अनुरुप विभिन्न अवलोकितेश्वरको मूर्तिहरुको स्थापना गरे । आजसम्ममा अनुसन्धान गरी भेटिएका अवलोकितेश्वरको मूर्तिहरुमा कान्तिपुरको लगनटोलको रामदेवको पालामा (अ.ई ५४७, संवत् ४६९) स्थापना गरेको मूर्तिलाई पुरानो मानिएको छ । उक्त मूर्तिको पादपीठमा अभिलेख उल्लेख भएको छ ।[९] लिच्छविकालमा यस्ता मूर्तिहरुको व्यवस्था थियो । गौयुद्ध, मल्लयुद्ध, त्यसबेलाका मुख्य जात्राहरु थिए । नेपालमा प्रचलित अन्य जात्रामा रातो मच्छेन्द्रनाथको रथ बनाई तान्ने जात्रालाई सबैभन्दा पुरानो जात्राका रुपमा लिइन्छ । यो जात्रा सम्बन्धमा गोपालराज वंशावलीमा यसरी उल्लेख भएको छ ।

"श्री नरेन्द्रदेव वर्ष ३५ तष्य आचार्य वंधुश्य द्वयन श्री वुंगमलोकेश्वर भट्टारकस्य जात्रा कृत्वा भवति ।"[१०]

शिवदेवको खोपासी स्थित शिलालेखमा "कैलाशकूट यात्रा" भनी लेखिएको छ ।[११]

नरेन्द्रदेवको पालामा अनत्तलिंगेश्वर अभिलेखमा जेष्ठ शुक्ल एकादशिमा 'वराहा यात्रा' विषयमा चर्चा गरिएको छ ।[१२]

मध्यकाल आएपछि नेपालको सामाजिक जीवनमा ठूलो परिवर्तन आयो । विभिन्न मेला र जात्रालाई धेरै महत्व दिदै मनाउने गरियो । काठमाडौं, ललितपुर, भक्तपुर मध्यपुर (ठिमी), साँखु र विभिन्न ठाउँहरुमा यस्ता जात्रा चलाउने गरिएका थिए । यी जात्राहरुमा विशेषत: कुनै एक धर्म र सम्प्रदायको मात्र अधिकार नभई सबै धर्म र संप्रदायको आदर्श, कर्मकाण्ड तथा तन्त्रमन्त्र संग सम्बन्ध हुने गर्दथ्यो ।

मध्यकालमा धेरै प्रकारका जात्राहरुको स्थापना भएका थिए । ने.सं. ४९९ को शिलालेखमा राजा जयप्रकाश मल्लद्वारा इन्द्रजात्रा चलाएको उल्लेख छ ।[१३] भाषा वंशावलीमा साँखु वज्रयोगिनीको जात्रा राजा सूर्यमल्लले स्थापना गरेको वर्णन छ । त्यस्तै ने.सं. ५८० तिर अमरमल्लले पिशाच चतुर्दशी (पाहाँचऱ्हे) पर्व मनाई टुँडिखेलमा घोडा दौडाउने जात्रा, लुँमधि, कंकेश्वरी र न्यतमरु अजिमा (नरदेवी) को खट जुढाउने जात्रा

चलाएका थिए ।[१४] यसरी नै काठमाडौंको जनबहाल स्थित सेतो मच्छेन्द्रनाथको रथ बनाई तानी रथजात्रा मनाउने चलन चलेको थियो ।

पाटनमा चलेका विभिन्न जात्राहरुमा रातो मच्छेन्द्रनाथको (लोकनाथ, बुँगद्यो) र मीननाथ (चाकवा:द्यो) लाई रथमा चढाई तान्ने रथयात्रा प्रमुख मानिन्छ । यी रथहरु जावलाखेलमा पुगेपछि भोटो जात्रा भनी भोटो देखाउने गरिन्छ ।

भक्तपुरको प्रमुख जात्रा विस्केट जात्रा धूमधामका साथ मनाउने चलन छ । यस्तै ठिमी मध्यपुरमा बैशाख संक्रान्तिका दिन बालकुमारीको राजदरवारमा ३२ वटा खटहरुमा विभिन्न देव देवताहरु राखी खट जात्रा गरिन्छ । कीर्तिपुरमा पनि सातगाउँ (न्हय्गाँ) को जात्रा भनी इन्द्रायणीको जात्रा चलाइन्छ । यसरी मध्यकालमा धेरै प्रकारका जात्राहरुको प्रचलन हुन गएको छ । तर कतिपय जात्राहरु चलाउन नसकी बन्द भएका पनि छन् । कतिपय जात्राहरु त लोप पनि भइ सके । तर अचेल विभिन्न करुणामय लोकेश्वरका जात्राहरुलाई निकै महत्व दिई मनाउँदै आएका छन् । लोकेश्वरहरुको जात्राको सम्बन्धमा यसको उत्पत्ति कहिलेदेखि भयो भनी यकीन साथ प्रमाण दिई भन्न सकिएको छैन । पौराणिक कथा र विभिन्न शासकहरुको राज्यकालमा भएका घटनाहरुको सम्बन्धमा बंशावलीको आधारमा मात्र भन्न सकिएको छ ।

नेपालमा यी जात्राहरुको सम्बन्धमा कुनै पनि बेला र आपद विपदको समस्याभएको बेलामा सुरक्षाको निमित्त करुणामय लोकेश्वरको स्मरण गर्ने चलन छ । साथै प्रजाहरुको दु:ख हरण गर्न र धार्मिक मनोरञ्जनका लागि भएपनि जात्राहरु चलाउँदै आएका छन् । जात्राबाट नै यहाँ सामाजिक एकता र धार्मिक एकता त्यसबेला देखि नै नेपालीहरुले प्राप्त गर्दै आएको छ ।



# रक्तावलोकितेश्वर (रातो मच्छेन्द्रनाथ)

## ३.१.१ रक्तावलोकितेश्वरको परिचयः

नेपालमा सृष्टि भएका धेरैजसो लोकेश्वरहरुमा रक्तावलोकितेश्वर करुणामयको स्थान निकै उच्च छ । करुणामय लोकेश्वरलाई नेवारहरु बुँगद्यो भन्ने गर्दछन् । अन्य जातिले लोकनाथ, रातो मच्छेन्द्रनाथ वा रातो मत्स्येन्द्रनाथ भन्ने गर्दछन् । लोकनाथ रक्तवर्ण अवलोकितेश्वर भएकोले हिन्दूहरु यसलाई भर्खरै उदाउन लागेको सूर्यनारायणको रुपमा लिन्छन् ।[१५] महायानी बौद्ध परम्परागत अनुसार लोकेश्वरलाई अभिताभ बुद्धको रुपमा मान्दछन् । समस्त लोकलाई करुणा राख्ने करुणाका खानी वहाँ करुणावतार हुनुहुन्छ । लोकनाथ महायानी बौद्ध ग्रन्थ अनुरुप पंचबुद्धको मुकुट शिरमा धारण गरी रहने आदि बुद्ध मध्येमा बज्रसत्वको बुद्धरत्न भनिए तापनि ज्ञानमूर्तिको प्रज्ञा पारमिताको धर्मरत्न भनिए तापनि आर्यावलोकितेश्वर करुणामयलाई संघरत्नको रुपमा लिएको छ ।[१६] नेवार बौद्ध संस्कृतिमा आर्यावलोकितेश्वरको निकै ठूलो महिमा छ । यसैले करुणामयलाई विभिन्न नामले संवोधन गरेका छन् । बौद्ध पुराण अनुसार लोकेश्वरलाई पद्मपाणि बुंगमलेकिश्वरको रुपमा संवोधन गरिएको छ ।

रक्तावलोकितेश्वर लोकनाथको वर्ण अरुणावर्ण छ । दुई ठूल ठूला आँखा छन् । दबिएको नाक छ । यसको उचाईमा चारफुट लामो छ । पवित्र माटोले (मृत्तिका, तेराकोटा) बनेको मूर्ति सुन्दर र भव्य देखिन्छ । शिरमा रत्नमुकुट, निधारमा टिका, कानमा रत्न जडित गहनाले सुसज्जित भएको छ । घाँटिमा कर्कोटक नागको रत्नमाला, हातमा चूरा बाला र खुट्टामा कल्लीले सुशोभित छ । दाहिने हात वरद मुद्रामा छ । बाँया हातमा कमलको फूल छ । लोकनाथ विराजमान हुने विहारहरुमा ललितपुरको त:बहाल र बुंगमतिको मन्दिर दुवै उत्तरतिर फर्केको छ । यसैले यो जहिलेपनि उत्तराभिमुख गरी राखिने भएको छ । रक्तावलोकितेश्वर निरामिषको रुपमा मानिएकोले पंचामृत राखेर मात्र पूजा गरिन्छ । बुंगमतीको लोकेश्वरलाई मानवमात्रको उद्धार गर्ने अन्नदाताको रुपमा मान्ने गर्दछ ।

### ३.१.२ रक्तावलोकितेश्वर (रातो मच्छेन्द्रनाथ) नेपाल ल्याएको वंशावली:

रक्तावलोकितेश्वरको उत्पत्ति सम्बन्धमा विभिन्न पौराणिक किंवदन्ती र वंशावलीहरु छन् । रक्तावलोकितेश्वरको उत्पत्ति विषयमा यस्तो उल्लेख छ: चारकल्प मध्ये पहिलो अनन्तकल्पको चार युगमा सत्ययुगको पहिलो पादकालमा आफ्नो मनले इच्छा गर्दा अभिताभ बुद्ध पछि पद्मपाणी नाम गरेको बोधिसत्वलाई लोक महारंजन नामको समाधि अवस्थामा छँदा आदि बुद्धले लोकेश्वर भनी नामाकरण गरेका थिए । कुनै समयमा पद्मपाणी बोधिसत्व समुद्रमा माछा भई सुतिरहेको अवस्थामा पुन: आफ्नो स्वरुपमा आएपछि त्यसै बेलादेखि मत्स्येन्द्रनाथ वा मच्छेन्द्रनाथ भन्ने गरेको हो । कालान्तरमा यही मत्स्येन्द्रनाथ सुखावती भुवनबाट मनुष्यहरुको उद्धार गर्नको निमित्त पद्मपाणी लोकेश्वरको एक अंशलिई भारतको आसाम राज्यको कामारुकामाक्षामा राक्षसहरुका राजा शशीकी महारानी मायाको कोखबाट जन्मेका ५०० राजकुमारहरु मध्ये सबभन्दा कनिष्ठ पुत्रको रुप जन्म भएका थिए ।[१९]

नेपालमा भएको वंशावलि मणिरत्न मालामा करुणामय लोकनाथ आसामबाट ल्याइएको कथा वर्णित छ । करुणामय लोकनाथले सुखावति भुवनबाट मर्त्यमण्डलका सबै प्राणीहरुलाई सुख पुऱ्याउन र षट्गतिमा रहेकाको दु:ख मुक्ति गर्ने हेतु यक्षलोकमा जन्म लिएका थिए ।

"सुखावतिस्ये लोकेशं षट्गति दु:ख तारकम् ।
नरक संशोधनं देवं नौमि श्री करुणामयमं ॥[२०]

रातो मच्छेन्द्रनाथ नेपालमा ल्याएको कथा वंशावलीमा यसरी उल्लेख भएको छ ।[२१]

"परापूर्वकालमा यस नेपाल मण्डलमा भक्तपुर देशमा गुणकामदेवको शासनकालमा उनको संतानको नाममा बत्तीस लक्षणले युक्त भएको एउटी छोरी थिइन् । उनले आफ्नी छोरीलाई स्यालसंग बिहे गरिदिन्छु भनी ख्याल ठट्टा गर्दै के भनेका थिए साँच्चै कै एक दिन राजा गुणकाम देव नारायणको दर्शन गर्ने अभिलाषाले जंगलमा घुम्न जाँदा एउटा सेतो स्याल नारायणको अवतार लिई जंगलमा घुमिरहेको देखे । यो देखी राजा छक्क पर्दै नारायणलाई बिन्ति गरे । नारायणले राजालाई प्रजाको हितको लागि केही बरदान माग्न भने । राजाले समस्त प्रजाको हितको लागि बालीनाली राम्रो होस् भन्ने बरदान मागे । तर अन्न बाली लगाउँदा धानभित्र चामलको गेडी नभएकोले नारायणसंग धान भित्र

चामलको गेडी रहोस् भनी बरदान मागे । तर यो काम आर्यावलोकितेश्वरले मात्र गर्न सक्दछ भनी नारायणले भने । यस पृथ्वीमण्डलमा कामुनि क्षेत्रमा यक्षणीको गर्भबाट करुणामयको जन्म भइसकेको छ । यसैले उक्त करुणामयलाई नेपालमा ल्याउनका लागि अष्टमीका दिन ब्रतबस्न आग्रह गरे । अष्टमीको ब्रतबसेको कारण राजा गुणकाम देवलाई एउटा सुपुत्र प्राप्त भयो जसको नाम नरेन्द्रदेव रहन गयो ।

गुणकाम देव पछि नरेन्द्रदेवको शासनकालमा नेपाल भूमिमा जलबृष्टि नभई चारैतिर ठूलो हाहाकार मचियो । अनेक शान्ति स्वस्ति गर्दापनि बाऱ्हवर्ष सम्म पानी नपरी दिनाले मानिसहरुमा ठूलो दु:ख हुन गयो । यो देखी राजा नरेन्द्रदेवले शान्तिकराचार्य कहाँ जानु भई सोधपुछ गरे र उनको दिव्यदृष्टिबाट हेर्दा करुणामय मच्छेन्द्रनाथको शिष्य गोरखनाथ कनफत्ता योगी (गोबरबाट सृष्टि भएका) नेपाल आई मृगस्थलीमा नागमाथि आसन बनाइ तपस्या गर्दा यहाँ अनावृष्टि भएको रहेछ भन्ने चाल पाए । गोरखनाथले करुणामय मच्छेन्द्रनाथबाट अनेक शिक्षा दिक्षा, विद्याशास्त्र तंत्रमंत्र योगाभ्यासको ज्ञानगुण पारंगत भई देशभर प्रसिद्धि प्राप्त गरेका थिए । गोरखनाथ आफ्नो दिनचर्यामा श्री करुणामयलाई संझी बिहान, दिउँसो र साँझ नित्यरुपमा वन्दना गरी गुरुलाई स्मरण गर्दथे । गुरु लोकनाथको दर्शन गर्न नेपाल आएका गोरखनाथ नागको आसनबाट नउठेसम्म जलबृष्टि नहुने भएकोले करुणामय मच्छेन्द्रनाथ (लोकनाथ) लाई तुरुन्तै कामारुकामाक्षबाट नेपालमा ल्याउन शान्तिकराचार्यले राजा नरेन्द्रदेवलाई सल्लाह दिए । शान्तिकराचार्यले मच्छेन्द्रनाथलाई नेपालमा ल्याउनका लागि आफ्ना शिष्य बन्धुदत्त बज्राचार्यको नेतृत्वमा भक्तपुरका राजा नरेन्द्रदेव र ललितपुरका रथचक्र ललित ज्यापुलाई भरिया बनाई कामारुकामाक्षमा पठाए । बाटोमा विशाल कर्कोटक नागराजलाई मित्र बनाई उनलाई पनि संगै लगे ।

शिलानदी पार गरी कामारु कामाक्ष पुगे । त्यहाँका राजालाई पेट दुख्दा कसैले निको पार्न सकेको थिएन । तांत्रिक वैद्यराज बन्धुदत्त वज्राचार्यले आफूहरु कामारु कामाक्ष आएको आशय राजालाई भने । राजाको सबभन्दा प्यारो कान्छो छोरा लोकनाथलाई नेपाल मण्डलमा लैजान भनी अनुरोध गरे । तर रानी यक्षणीको निकै प्रिय सन्तान भएकोले मानिनन् । तांत्रिकाचार्य बन्धुदत्तले पुश्चरण बसी तारण राखी मोहनी लगाई भ्रमररुप बालक लोकनाथलाई कलशमा साधना गरी लोक उद्धार गर्नको निमित्त रिद्धिसिद्धि बलले समाधि गरी नेपालमा ल्याए ।

करुणामय लोकनाथ भारतको कामारु कामाक्षबाट नेपालमा ल्याएपछि दक्षिणकाली स्थित कटुवाल दहमा पुग्दा उक्त करुणामयलाई ल्याउनेहरुलाई हत्केलाले पख भनी बाटो छेके । हातले छेक्ने को हो भनी बन्धुदत्त बज्राचार्यले तंत्रमंत्र र शास्त्रोक्त विधिले हेर्दा त्यो हातले छेक्ने व्यक्ति टेबहालका देवता रहेछ । हत्केलाले छेकेको हुनाले त्यस देवतालाई 'पाल्हाद्यो' भनी भन्ने गरिएको छ । उक्त देवताले लोकनाथ करुणामयलाई टेबहालमा स्थापना गर्न लिन गएको रहेछ । तर लोकनाथलाई टेबहालमा नराखी ललितपुरमा लोकनाथ रहने त:बहालको जति जग्गा थियो त्यति नै जग्गाको बन्दोबस्त गरी राजकीर्ति बिहारको नामले स्थापना गरेको छ । आजसम्म पनि संकट हरण गर्ने 'संकटा' को रुपमा एक हात माथि उठाई राखेको मूर्ति टेबहालमा स्थापना गरिराखेको छ ।[२२]

करुणामय रक्तावलोकितेश्वर लोकनाथलाई नेपालमा ल्याई पुगेपछि योगासन गरी तपस्यामा रहेका गोरखानाथ आफ्ना गुरु लोकनाथको दर्शन गर्न भनी उठेर आए । त्यसपछि गोरखानाथले आसन गरी थिचिराखेको नागहरु उठे । नेपाल मण्डलमा बाह्र वर्षसम्म रोकिएको जलबृष्टि भयो । उक्त नेपाल ल्याएको करुणामयलाई कहाँ विराजमान गराउने भन्ने कुरामा विवाद उठ्यो । ललितपुरका राजा वरदेवको आज्ञाले यस कुराको पुर्पक्ष गर्नका लागि एउटा पाको उमेरका बुढालाई छाने । उक्त जेष्ठ बुढाले सातवटा ओखल (उग:) माथि उभिएर लोकनाथलाई ललितपुरमा नै विराजमान गराउनु पर्ने कपटपूर्ण निर्णय गर्नु पऱ्यो । यसरी कपटपूर्ण निर्णय गरेको हुँदा त्यो ललित ज्यापू ओखल धसिएर उनको त्यही मृत्यु हुन गयो । यसैबेला देखि लोकेश्वरलाई ललितपुर मै राख्नको निमित्त यंपी विहारमा बस्ने शुद्ध चित्त र धर्म प्रति श्रद्धा राख्ने सुमति सुनय श्रीमित्रले करुणामयको माटाका मूर्ति बनाई बत्तीस लक्षणले संयुक्त गरी कलशको गर्भमा राखी बौद्ध विहार त:बहालमा प्रतिस्थापना गरे । यो कार्य सिद्धिका लागि गणेशको मूर्ति पनि संस्थापना गरिएको छ । ईखा भन्ने ठाउँमा एउटी कन्यालाई कुमारीको स्थापना गरे । यस करुणामय लोकनाथलाई ललितपुरको त:बहालमा सूर्य उत्तरायण भएको बेला ६ महिना राखिन्छ भने बुँगमती (बुँग) मा सूर्य दक्षिणायण भएको ६ महिना सम्म राखिन्छ ।[२३]

पुरानो बंशावलीमा लोकनाथको रथ राखिएको दिन सम्बन्धमा यसरी उल्लेख भएको छ ।

"नेपाले ललिता तिथौ प्रतिपदा बैशाख शुक्ले दिने ।
श्री लोकेश्वर देव रम्भ सुरथे हृष्टवा विराजं ततः ॥
देवाः सुर मानवदत्त भुजगाः कुर्वत्ति यात्रा तथा
दाक्षिणये अमरापुरे दिशिगतं विघ्नादिनं शान्तयेत ॥[२४]

गुरु बन्धुदत्त बज्राचार्यले श्री करुणामय लोकनाथ नेपाल देशमा ल्याएको विषयमा यसरी लेखिएको छ ।

"अतीत कलिवर्षेषु शून्य द्वन्द्व र साग्निषु ।
नेपाले विजये श्रीमानर्यावलोकितेश्वरः ॥

३६०० वर्ष कलिगत वर्ष पुग्दा श्रीमत् आर्यावलोकितेश्वर लोकनाथलाई नेपालमा ल्याएको हो भन्ने कुरा प्रमाणित भएको छ ।[२५]

श्री करुणामय लोकनाथलाई नेपालमा प्रतिस्थापन गरिसकेपछि यसको महत्व दिनहुँ बढ्दै गएको छ । नेपाल मण्डलका शासकहरुले रक्तावलोकितेश्वर बुंगमलोकेश्वरलाई करुणामय, लोकनाथ, मत्स्येन्द्रनाथ, मच्छेन्द्रनाथ, बुंगमलोकेश्वर, बुँगद्यः, आर्यावलोकितेश्वर, बृष्टिदेव आदि विभिन्न नामले पुकारी भाव भक्ति श्रद्धा राखी पूजापाठ गरी जात्रा मनाउँदै आएका छन् । यसैले नेपालको इतिहासमा लोकनाथसंग सम्बन्ध रहेको धेरै ऐतिहासिक घटनाहरु उल्लेख छन् ।

१. नेपालमा लोकनाथको प्रतिस्थापन गरेको विषयमा गोपालराज वंशावलीमा यसरी उल्लेख भएको छ ।

"श्री नरेन्द्रदेव वर्ष ३५-तष्य आचार्य बन्धूश्य द्वयेन श्री बुंगमलोकेश्वर भट्टारकष्य जात्रा कृत्वा भवति ।[२६]

२. नेपालको वंशावलीमा लोकनाथ कति पुरानो छ भन्ने कुरामा ने.सं. ४०९ को नेपालको दोश्रो पटक हमला गर्न आउने जितारी (जयतारि मल्ल) मल्लले गाउँ भरी आगनजी गरेर गरेका थिए । यति गरी स्वयम्भू, लोकनाथ र पशुपतिको दर्शन र पूजाआजा गरी आफ्नो राज्यमा फर्केका थिए ।

"पुनः द्वितीय जयतारि प्रविष्ट ॥ ग्रामादि अग्नि दाहम् करोटी सङगन चैत्य प्रसयति बुँगमलोकेश्वर दर्शनम् श्री पशुपति ।

स्वस्थेन स्वराष्ट्र गमन भवति । सम्बच्छर चारिसन नवः ।[२७]

३. ने.सं. ४१० (वि.सं. १३४६) फागुन प्रतिपदाका दिन जयतारि (जितारि मल्ल) नुवाकोटको दखल गरी बुँगमती मन्दिरमा जानु भई रातो मच्छेन्द्रनाथमा कोश अपर्ण गरियो ।

"फागुन प्रतिपदा जयतारि वसेंलि तेलनक्वा काया बुँगदेवल पथिसर पम्भण्डार ढुंला (ग्वंल्वस पह्निम द्वारण दुम्विस्यय् थवलान अङ्कल विस्यम स्यानछा ।"[२८]

४. ने.सं. ४५७ मा लेखिएको महिरावणवध नाटक ग्रन्थमा वर्णित बुंगेश मत्स्येन्द्रनाथको स्तोत्रमा मत्स्येन्द्रनाथलाई 'शतमुखवैश्वानर' वा प्रेताधिनाथ भनि उल्लेख गरिराखेको छ ।

'श्री बुंगेशमहं नमे शतमुखं वैश्वानरं पावनं ।
पायेश्च्च नमामि नम्रशिरसा, प्रेताधिनाथं नमे ॥
नेऋत्यं शमतो वरञ्च पवनं................
अहं भवस्य समुदं सब्बात्मना सौभ्य हं ॥[२९]

५. नेपालका नामी मल्ल राजा श्रीनिवास मल्लले बुंगमती त:बहालमा मत्स्येन्द्रनाथको मन्दिर बनाए । लोकथानको मूर्ति राखी प्रवेशद्वार बनाई अनेक चैत्यहरु पनि प्रतिष्ठापन गरे । यस सम्बन्धमा ने.सं. ७९२ को सुवर्णपत्र फेला पारिएको छ । यस्तै ने.सं. ८०१ को शिलालेख मा उक्त विहारमा चैत्य पाटी पौवा आदि निर्माण गरेको तथ्य पुष्टि हुन आएको छ । उक्त शिलालेखमा करुणामयलाई परव्रम्हय स्वरुप मानिएको छ ।

"मत्स्येन्द्रं योगिनां मुख्य: शाक्त शक्तिं वदित्तियम् ।
बौद्धा लोकेश्वरं तस्मै नमो व्रह्म स्वरुपिणे ॥१॥[३०]

बुंगमती अभिलेख : ने.सं. ७९२ ई.सं. १६७२

### ३.१.३. रक्तावलोकितेश्वरको जात्रा:

नेपालको सबभन्दा ठूलो जात्रामा रक्तावलोकितेश्वर करुणामय लोकनाथको रथ तान्नु पनि एक हो । समस्त प्राणीको उद्धारकर्ता करुणाका खानि आर्यावलोकितेश्वर करुणामय लोकनाथको जात्रा परापूर्वकालदेखि राजकीय सम्मान दिई मनाउँदै आएको इतिहास साक्षी छ । लिच्छवीकालीन प्रतापी राजा नरेन्द्रदेवले बुद्ध अंकित कम्मरपेटी ( पटुका) बाँड्ने गरेका थिए । उनले नै लोकनाथलाई नेपाल ल्याई अति श्रद्धाका साथ

जात्रा गर्ने प्रथा चलाएका थिए । लोकनाथको रथको सबै भन्दा माथिल्लो टुप्पामा (धकिं बाय्मो) स्वयम्भू भगवानको मूर्तिलाई विराजमान गराईएको छ । उनैको स्थिति बन्देज अनुसार अद्यापि बुंगमलोकेश्वरको जात्रा चलाउँदै आएको छ । नेवार बौद्ध संस्कृतिमा बुंगमलोकेश्वरको जात्रा निकै महत्वपूर्ण जात्राको रुपमा रहेको छ ।

नेपालको इतिहासमा रथ जात्राको निकै महत्व छ । लोकनाथको रथ जात्रा गर्नु भन्दा अघि नेपालका विभिन्न देवताहरुको रथ तान्ने परम्परा थियो सो अनुसार ढलाछें टोलको लोकेश्वर, नारायण, मीननाथ (चक्वाद्यो) को रथ तान्ने परम्परा थियो । पछि ती देवताहरुको रथहरु एउटै रथमा गाभी लोकनाथ र मीननाथको मात्र रथ बनाई तान्ने प्रचलन भयो । यसरी रथ तान्ने परम्परा वि.सं. ६५० देखि शुरु भएको देखिन्छ । यो प्रचलन आजसम्म पनि यथावत चल्दै आएको छ । लोकेश्वरको जात्रामा राजाको समेत सवारी हुन्छ । ललितपुरमा कुमारीलाई पनि उपस्थित गराइनु पर्दछ । लोकनाथ र मीननाथको रथजात्रा करीब एक महिनासम्म धुमधामले गर्ने चलन छ । नेपालमा करुणामय लोकनाथको रथ जात्रा गर्ने विधि यस प्रकार छ ।[३२]

## ३.१.३.१. रक्तावलोकितेश्वरको जल अभिषेक (न्हवं वा धलिं लुइगु)

रक्तावलोकितेश्वर करुणामय लोकनाथलाई जल अभिषेक (न्हवं) विधि सम्पन्न गर्न त:बहालका षटांजुहरु (पांजु) ले चाहिने पूजाको व्यवस्था गर्दछन् । सो अभिषेकको दिनमा बज्राचार्य र पांजुहरुले बुंगमतीबाट ल्याइएको पवित्र जल स्थापना गरी त्यस विहारमा कलश पूजा गरिन्छ । कलशपूजाको पवित्र जललाई आठ वटा माटाका भाँडाहरु (भोंचा) मा राखी लोकनाथको मूर्तिमा कलशाभिषेक जलसिंचन गरिन्छ । यसपछि बज्राचार्य गुरुजुबाट गुह्यपूजा हुन्छ । पाथिमा (मानामा) फलफूलको टुक्राहरु, लावाहरु राखी फलाभिषेक (सिफँ लुइगु) गरिन्छ । नेकू जातिले खट ल्याई त:बहालबाट जात्रा गरी सुरक्षित रुपमा लगनखेलमा पुऱ्याइन्छ । बज्राचार्य गुरुजुहरुले लास्यामुद्रा गरी करुणामयलाई फेरि विधिवत पूजा गरिन्छ । नवनागहरु भएको पवित्र कलश बोकी नेकूहरुले मूर्तिलाई तीनपटक परिक्रमा गरी पूजा सम्पन्न गरिन्छ । त्यसबेला गुरुजुहरुले गरेको पाठसंगै करुणामयको मूर्तिमा विधिवत चार दिशामा थापिएको चार चाँदीको गाग्रीहरुले स्नान (न्हवं) अभिषेक गराइन्छ । भनिन्छ लोकनाथको महास्नानमा जुन दिशाको पानी पहिले पोखिन्छ त्यस दिशामा वृष्टि र बालीनाली खूब राम्रो हुन्छ । यो न्हवं स्नान जल अभिषेक जात्रा हेर्न अपार जनसमूहको भेला हुन्छ । जल अभिषेक कार्यक्रम सकिए पछि करुणामयलाई कपडाले छोपी मध्यरातमा कसैले नदेख्ने गरी मुर्दा

लगे झैं सी बाजा बनाई त:बहालमा लगिन्छ । अष्टमीदेखि त्रयोदशीसम्म नेकूहरुले मूर्तिलाई माटोले लिप्ने रंगाउने, नाक मुख आँखाहरु मिलाउने आदि रंगारोहणको विविध कार्य गर्दछन् । बैशाख कृष्ण द्वादशीका दिन बुंगमतीको योगाम्बर कहाँ बलिपूजा गरी 'खिचाभू' गरिने परम्परा छ । लोकनाथको मूर्तिलाई मन्दिर भित्र बाँया पट्टिको गद्दीमा स्थापना गरेपछि पञ्चसूत्र (पसूका) धागोबाट जीवन्यासको प्रतिष्ठापना गरिन्छ । जीवन्यास राखी प्रतिष्ठापना सम्पन्न भएपछि बज्राचार्य गुरुजुले करुणामयलाई दर्शकर्म विधि अनुसार गरिनु पर्ने जातकर्म नामाकरण, फलप्राशन, अन्नप्राशन, उपनयन (चूडाकर्म), व्रतादेश (व्रतमोक्षण), पाणिग्रहण, प्रतिष्ठा आदि शास्त्राअनुसार दशकर्म संस्कार विधि गरिन्छ । लोकनाथलाई अर्धनारीश्वरको रुपमा पनि मान्ने गरिन्छ ।[३३] बालिकालाई गरिने संस्कार ईही कार्य गुफा (बान्ह तय्गु) राख्ने विधि पनि गरिन्छ । यस्तै 'तिलयज्ञ' पनि गरिन्छ ।[३४]

### ३.१.३.२. रक्तावलोकितेश्वर रथ यात्रा

रक्तावलोकितेश्वर लोकनाथको न्हवं स्नान र दशकर्म विधि विधानको समाप्ति पछि बैशाख कृष्ण प्रतिपदादेखि नै रथ बनाउने कार्य शुरु हुन्छ । रथयात्राको लागि पाटनको पुलचोकमा रथ निर्माण गर्न पन्ध्र दिन लाग्दछ । मच्छेन्द्रनाथ अवलोकितेश्वरको प्रतिक भएकाले रथको माथिल्लो भागमा अभिताभ ध्यानी बुद्धको मूर्ति र क्वाबहालबाट ल्याइएको बज्रसत्वको मूर्ति स्थापना गरिन्छ । पांजुले स्वयम्भूमा गई पूजा गरी तारण राखिन्छ । यसबाट शक्ति प्राप्त हुन्छ भने धारणा छ ।

रक्तावलोकितेश्वर लोकनाथको रथलाई देवताको प्रतीकको रुपमा मानिएको छ । यो रथ विभिन्न प्रमाणहरुको आधारमा बनाउने गरिन्छ । सर्वप्रथम तांत्रिक गुरु वन्धुदत्त बज्राचार्यले रथ निर्माण गर्ने जुन विधि अपनाएका थिए अहिले पनि त्यही विधि अनुसार रथ निर्माण गर्ने गरिएको छ । यो मच्छेन्द्रनाथको रथ शिखराकार भई माथिको गोलाई सानो हुँदै जान्छ । यस रथमा त्रयोदश भुवनको प्रतीक स्वरुप तेन्ह तल्ला राखिन्छ । यो रथ बत्तिस लक्षण युक्त भएको मानिन्छ । रथका चार पांग्रालाई चार भैरवको प्रतीक स्वरुप मानिएको छ । चार भैरवहरुमा हयसिद्ध, हयग्रीव, लुप्त संहार ( लुइता संहार), लुभुको नन्दकुण्ड (लोन्देकोन्दे, रुद्रकुण्ड) हुन् । रथको मुनि बीचमा राखिएको लामो काठलाई 'घ:मा' भनिन्छ । घ:मालाई कर्कोटक नागराजको रुपमा मानिएको छ । यसको अग्र भागमा हयग्रीव (विघ्नातक) भैरवको मूर्ति स्थापना गरिएको छ । रथ तान्दा कुनै विघ्न बाधा नहोस भनेर कर्कोटक नागराजको शिखा श्री विघ्नातक

भैरवलाई आह्वान गर्ने गरिन्छ । रथ तान्दै लैजान्दा दायाँ-बाँया नढल्कियोस भनी रथको मेरुदण्ड सीधा गर्न डोरीले बाँधी दायाँ-बाँया आवश्यकतानुसार तन्काउने गरिन्छ । यसरी तान्ने डोरी 'जगल' लाई थरी-थरी नागको रुपमा मानिएका छन् । दायाँ जगललाई वासुकि नागराजको रुपमा लिइएको छ भने बाँया जगललाई शेषनागको रुपमा मानिएको छ । रथमा मच्छिन्द्रनाथको पछाडि रक्तवर्ण वोधिसत्व स्थापना गरिन्छ । यसलाई भीमेश्वर तथागत भनिन्छ । यस्तै यसलाई पछि आउने महादेव वा शिवको प्रतिकको रुपमा पनि मानिएको छ । यस कुराको प्रमाण गुण काण्डब्यूहमा उल्लेख भएको छ । यस रथको चारैतिर घोडा, सूर्य, शिवको गोरु, विष्णुको गरुड, ब्रह्माको राजहंस आदि थरी-थरीका मूर्तिहरु हुन्छन् । रथको सबभन्दा माथिल्लो भागलाई 'बाय्मो' भनिन्छ । रथको गजूरमा सबै प्राणीको रक्षा गर्न श्री लोकेश्वरको षडक्षरी मन्त्र 'ॐ मणि पद्मे हुँ' लेखिएको ध्वजा फरफराएको हुन्छ ।[३५]

करुणामय मच्छेन्द्रनाथको जात्रा चलाउन परापूर्वकाल देखि नै विभिन्न गुठीको व्यवस्था गरिएको छ । रथ बनाउने सम्बन्धमा अझै पनि कतिपय गुठीहरु कायम छन् ।[३६]

## १. विसात :

मच्छेन्द्रनाथको गुठीको निरीक्षण गर्ने र न्यायिक जाँच गर्ने काम विसातले गर्दछ । यस्तै रथ बनाउने सिकर्मी र अन्य ज्यामीहरु खोज्ने काम यिनीहरुले नै गर्दछन् । मल्लकालदेखि शुरु गरिएको यो व्यवस्था शाह राजा गीर्वाणयुद्धको पाला देखि विसातले हिसाब राख्न नसकिएकोले गुठी अड्डालाई जिम्मा दिइयो । पछि गुठी संस्थानले जिम्मा लियो । यसको अतिरिक्त रथजात्रा सम्बन्धी विभिन्न कार्यहरु छूट गुठीद्वारा र व्यक्तिगत रुपमा पनि गरिएका छन् ।

## २. लुसा गुठी :

मच्छेन्द्रनाथको रथमा तोरण राख्ने र अन्य व्यवस्था महाबौद्धका [redacted]को लुसा गुठीले चलाइ आएको छ ।

## ३. वाराही :

मच्छेन्द्रनाथको रथ बनाउने सिकर्मीहरुलाई वाराही भन्ने गरिन्छ । यो चौबिस जना [redacted] समूहको गुठी हो । रथलाई चाहिने सबै काठको बन्दोबस्त उनीहरुले नै गर्दछन् । हिन्दूस्तानमा रथ बनाउने सिकर्मीहरुलाई वाराही नै भन्ने चलन छ ।

## ४. यंयात :

मच्छेन्द्रनाथको रथ तान्नको निमित्त आवश्यक डोरी बनाउने, बेत, घाँस आदिको बन्दोबस्त गर्ने ज्यापुहरुलाई यंयात भन्दछन् । यिनीहरुले महाँकालको दीक्षा लिनु पर्दछ ।

## ५. घ:कू :

घ:कूले रथको बीचमा रहेको घ:मा:को संरक्षण गर्दछ र रथ तान्दा घ:कूको नियन्त्रण गर्दछ । यिनीहरुले पनि भैरवीशक्ति लिन दीक्षा लिनु पर्दछ ।

## ६. से से (व्राह्मण) :

मल्लकालदेखि नै से से व्राह्मण पुजारीहरुले मच्छेन्द्रनाथको रथ तान्दा आज्ञा दिने काम गर्दै आएका छन् । यिनीहरुलाई से से बाज्या पनि भनिन्छ ।

## ७. रथतान्नेहरुको समूह :

पुल्चोकदेखि जाउलाखेलसम्म रथ जात्रा गर्दा आ-आफ्नो इलाकामा विभिन्न जातिले रथ तान्न आउने चलन छ ।

मच्छेन्द्रनाथ करुणामयलाई रथमा विराजमान गराई रथ जात्रा गर्दा लिच्छवि राजा नरेन्द्रदेव आफै आउने कुरा इतिहासमा उल्लेख छ । तर पछि पछि राजाको प्रतीकको रुपमा राजाको खड्ग रथमा राखि तान्ने प्रथा चलाइयो । अहिलेसम्म पनि रथ तान्ने बेलामा दरवारबाट खड्ग ल्याउने चलन छ ।

ललितपुरको पुल्चोकमा बैशाख शुल्क प्रतिपदाको दिन (बछलाथ्व पारु) रक्तावलोकितेश्वर मच्छेन्द्रनाथको रथारोहण हुन्छ । तीन दिनसम्म लोकनाथको मूर्तिलाई रथमा राखिन्छ । घ:कू (रथको ब्रेक लाउने) र पांग्रामा बलि दिने परम्परा छ । रथारोहणको दोस्रो दिन रथ अगाडि अवलोकितेश्वरको सामु कलशपूजा सम्पन्न गरिन्छ । अक्षय तृतीयाको दिनमा पुल्चोकको सोह्रखुट्टे पाटीमा गाई (गौदान), सखर र पेय पदार्थ आदि दान गरिन्छ । यसरी गौदान दिनुको कारण पहिले मच्छिद्रनाथलाई कामारु कामाक्षबाट ल्याउदा वहाँलाई कहाँ विराजमान गराउने भन्ने सम्बन्धमा ललितपुरमै राख्ने भनी ओखत (उग:) मा बस्ने बुढो मान्छेको सम्झनामा गरिएको हो भनिन्छ । यसैले यो टोलको नाम नै इति टोल भनी रहन गयो ।[३७]

बैशाख शुक्ल चतुर्थीमा रथारोहण गरेको चौथो दिन बुंगमतीको हयग्रीब भैरव स्थानमा बलिपूजा गरिन्छ । यस्तै यस दिन पाटनको टंगाल बहाल नजिकै स्थापित जटाधारी लोकेश्वर मीननाथको रथारोहण गरी रथयात्रा शुरु गरिन्छ । परम्परा अनुसार रक्तावलोकितेश्वर मच्छेन्द्रनाथको स्वागत सत्कार गर्नको लागि टंगालबाट पुल्चोकसम्म मीननाथको रथ तानी ल्याइन्छन् । सो रथ तान्ने शुभ अवसरमा वडागुरुजुको पल्टन र अन्य बाजागाजा बजाइ लावालस्कर सहित जटाधारी लेकिश्वरको रथ अघि-अघि र रक्तावलोकितेश्वरको रथ पछि-पछि तानी गाबहालमा पुऱ्याइन्छ । लोकनाथको रथलाई गाबहालमा हस्ते नभनी से से भनी कराई तान्ने परम्परा छ । जटाधारी लोकेश्वर गाबहालको निश्चित मच्छेन्द्रनाथको रथ स्थानसम्म पुऱ्याएपछि 'गाबहाल यात्रा' गा:बाहा या: भनी हर्ष बढाइ गरिन्छ । गाबहाल यात्राको रथ तान्ने इलाकाहरुमा नटोल, क्वालखु, अगिमध:, छायबहाल, पिम्बहाल, सिंबहाल, दौबाहाल, बुबाहाल र गाबहाल पर्दछन् । यस दिन यस क्षेत्रका वासिन्दाहरुले 'छोयूला भू' मनाउँछन् र त्यसको भोलिपल्टको दिनलाई 'भुजया:' भनिन्छ । सबैले घर-घरबाट पूजा लिएर भुजया: जाने चलन छ । गा:बहालको जात्रालाई गुरु वंधुदत्त बज्राचार्यको सम्झनामा गरिने जात्रा पनि भन्ने गरेको छ ।

मच्छेन्द्रनाथ र मीननाथका रथहरु षष्ठीका दिन घुमाई पश्चिम दिशातिर तानेर लगिन्छ । राजा श्रीनिवास मल्लको पालादेखि 'नुगल' भन्ने ठाउँमा जात्रा शुरु भएको हो भनिन्छ । यसभन्दा पहिले रथहरु मंगलबजारबाट सिधै लगनखेलमा लैजाने गरिन्थ्यो । ने.सं. ७८१ (वि.सं. १७१८, सन् १६६१) सालदेखि नुगलमा रथ तान्ने उल्लेख गरेको छ । राजा श्रीनिवास मल्लले नुगल टोलको विकास गरेका थिए । यसरी नुगल टोलमा रथ तान्नुलाई मच्छेन्द्रनाथको मीत (त्वायध:) कहाँ भेट गराउन लगेको हो भनिन्छ ।

गाबहाल यात्रापछि रक्तावलोकितेश्वरको रथलाई अगाडि पार्दै जटाधारीलोकेश्वर मीननाथको रथलाई पछाडि पारी रथहरु सुन्धारामा पुऱ्याइन्छ । सुन्धारा पुगेपछि त्यहाँका बासिन्दाहरुले 'छोयलाभू' र अर्को दिन 'भुजया:' मनाउँछन् । यस सुन्धाराको जात्रालाई भक्तपुरका राजा नरेन्द्रदेव तथा भक्तपुरवासीहरुको जात्रा भन्ने चलन छ ।

सुन्धाराको जात्रा सकिएपछि त्यसको भोलिपल्ट दुवै रथलाई ओकुबहाल, टंगाल हुन्दै लगनखेल नजिकै पोडेटोलमा पुऱ्याइन्छ ।

लगनखेल पुगेपछि स्नानमण्डप संगैको माजुसिमा अर्थात 'द्वलंभाजु' को रुखलाई परिक्रमा गराइन्छ । त्यसको भोलिपल्ट पञ्चरक्षाको पूजा र महावली गरिन्छ । यहाँको वासिन्दाहरुले 'छोयूलाभू' मनाउँछन् । देशका राजा प्रजा र करुणामय स्वयंको शान्ति स्वस्तिको लागि 'भुजया:' गरिन्छ ।

गाबहाया या:, जुग:या र लगनखेलको या: तीनै या:को सफलताको प्रतीक स्वरुप रथको धर्किं बाय्‌मोमा बसी यँबाहरुले नरिवलले अभिषेक गर्ने चलन छ । यसलाई नेवारहरु 'नैंक्यालं लुइगु' भन्दछन् । यो नरिवल खसाल्ने जात्रा निकै रमाइलो हुन्छ । जात्रा हेर्न विभिन्न ठाउँहरुबाट मानिसहरु आउँछन् । रथबाट खसालिएको नरिवल लिन सक्ने व्यक्तिलाई पुत्रलाभ हुन्छ वा व्यापारमा सफलता मिल्छ वा जागिरमा मान-सम्मान बढ्छ भन्ने धारणा छ । नरिवल जात्राको भोलिपल्ट बिहान सबेरै आइमाईहरुले रथ तानी थतिको चारदोबाटोसम्म पुऱ्याइन्छ । यसपर्वलाई 'याक:मिसाया भूजया:' ( एक्लो आइमाइको) मंगलबजारको पाटीमा चारजना जोशीहरु भेला गराई जावलाखेल यात्राको लागि शुभसाइत हेर्न लगाइन्छ । जसलाई 'घ: पिसालेगु दिं' (देउटा तान्ने दिन) भनिन्छ ।

### ३.१.३.३. भोटो जात्रा

रक्तावलोकितेश्वर मच्छेन्द्रनाथको भोटो जात्राको मूल विशेषता यस देउताको रथ तानी जावलाखेलमा पुगे पछि भोटो देखाउनु पनि एक हो । रथलाई जावलाखेल लैजानुलाई 'घ: पिसालेगु' भनिन्छ ।

ज्योतिषहरुले दिएको शुभ दिन र शुभ मुर्हुतमा विधिवत पूजा गरी पञ्चसूत्र धागोले रथ तान्ने काम हुन्छ । मच्छेन्द्रनाथको रथलाई जावलाखेलको छ्वासकामिनी भएको खल्डोमा पश्चिमाभिमुख गरी मीननाथको रथ मच्छेन्द्रनाथको रथको नजिकै उत्तरतिर राखिन्छ । जावलाखेलमा रथ पुगेपछि भोटो देखाउने दिनको एक दिन अघि भुज:या हुन्छ । यहाँ बलिभाण्डका भातका सिताहरु फाल्ने ठाउँ भएकोले नै यस ठाउँको नाउँ 'जाव्हलाख्यो' भनिएको हो । भुजया:' को राति पांजुहरुका श्रीमतीहरु 'नर्कीखा: थनेगु' भनेर पूजा गर्न जान्छन् ।

रक्तावलोकितेश्वर अरु देउटा भन्दा निकै प्रभावशाली र लोकप्रिय हुन गएको छ । यदि रथ तान्ने बेलामा भुईंचालो गएमा वा केही विघ्न बाधा हुन गएमा पुन: साइत हेरेर मात्र रथ तान्ने र भोटो देखाउने गरिन्छ । भोटो देखाउने राष्ट्रिय पर्वको दिन उपत्यका भरि सार्वजनिक बिदा दिइ सरकारी मान्यता दिदै आएको छ । सोही दिन राजा र राजपरिवारको राजकीय सम्मानपूर्वक जावलाखेलमा सवारी हुन्छ । राजालाई भोटो देखाउने गर्दछ । यसबेला पाटनका कुमारीको पनि रथमा चढी विराजमान गराइन्छ । यो भोटो देखाउने परम्पराको विषयमा यस्तो लोकोक्ति छ । सबै प्राणीको अन्नदाता आर्योवलोकितेश्वर करुणामय मच्छेन्द्रनाथ प्राणीहरुले खान पाएको छ छैन भनी रथमा बसी चारै दिशामा हेर्नको निमित्त रथ तानेको हो भनिन्छ ।

भोटो जात्रामा भोटो देखाउने परम्परा कसरी आयो भन्ने सम्बन्धमा एउटा किम्बदन्ती छ । भोटो देखाउने चलन मच्छेन्द्रनाथको रथ तान्ने परम्परा चलेपछि मात्र भएको हुन सक्छ भन्ने पौराणिक कथाबाट प्रष्ट हुन्छ ।[३९] कथा यसै प्रकार छ:-

कुनै समयमा टौदहका नागराजाका रानीको आँखा दु:खेछ । धेरै वैद्यहरु देखाए तापनि निको पार्न नसकिएपछि एक दिन खेतमा जान लागेको किसानलाई नागराजाले वैद्य ठानी नागलोकको दरवारमा लगी औषधी गर्नु लगाए । उक्त किसान वैद्य नभए तापनि वैद्य हुनु पर्ने अवस्थामा पुगेर औषधी गर्नु पर्दा त्यो किसानलाई के गरुँ कसो गरुँ भई मन-मनले करुणामयको स्मरण गर्‍यो । डरले आफ्नो जीउमा आएको पसिनाको मयल निकाली नागरानीको आँखामा लगाई दिए । दैव संयोग रानीको आँखा दुखेको चट्क निको भयो । यो देखि नागरानी खुशीले प्रसन्न भई किसानलाई तिमीले के माग्छौं भन्दा किसानले भित्तामा झुण्ड्याई राखेको टलल टल्केको एउटा भोटो माग्यो । नागराजले त्यही भोटो किसानलाई दिइ पठाए । एक दिन किसान खेतमा काम गरि रहेको बेला नागराजले दिएको भोटो भुँइमा राख्दा त्यही बेला एउटा भूत आई त्यो भोटो सुटुक्क चोरेर लग्यो । एकदिन जावलाखेलमा मच्छेन्द्रनाथको रथ जात्रा भइराखेको बेला उही भूतले सो भोटो लगाई हेर्न आएको रहेछ । यो देखी किसानले आफ्नो हराएको भोटो भूतले लगाएर आएको देख्यो । किसानले तिमीले लगाएर आएको भोटो मेरो हो, मेरो भोटो मलाई फिर्ता देउ भनी भोटो खोसाखोस गर्न लागे । दुई जनाको बीच झगडा हुन गयो । त्यहाँ जात्रा हेर्न आउनेहरुले त्यो भोटो ती दुबै जनालाई नदिने भनी मच्छेन्द्रनाथलाई चढाउन लगाए त्यसै बेलादेखि बर्षेनी उक्त भोटो यहाँ राजालाई समेत भेला गराई सबै प्रजाहरुको साथ भोटो देखाउने चलन बसाले । तर यो भोटो देखाउने चलन कहिलेदेखि शुरु भएको हो भन्ने हुनै ठोस प्रमाण भेटिएको छैन । तापनि मध्यकालदेखि भोटो देखाउने चलन चलेका अभिलेखहरु छन् । वर्षेनी मच्छिन्द्रनाथ र मीननाथको रथहरु जावलाखेल पुर्‍याएको चौथो दिन जावलाखेमा (ज्यावलापि सालेगु दिन) भोटो देखाउने जात्रा हुन्छ । भोटो देखाउने मानिसले चारै दिशामा तीन पल्ट भोटो देखाउने गर्दछ । यसरी चार दिशामा देखाउने विषयमा यस्तो किम्बदन्ति भएको उल्लेख छ:

पहिलो पटक: देव, मनुष्य र नागलोकलाई देखाएको हो ।

दोश्रो पटक: कान्तिपुर, ललितपुर र भक्तपुर टौदह:मा निर्वाण भएर गएका मच्छेन्द्रनाथलाई नेपालमा ल्याउने कान्तिपुरका वन्धुदत्त बज्राचार्य, भक्तपुरका राजा नरेन्द्रदेव र ललितपुरका रथचक्र र कर्कोटक नागराजको सम्झनामा भोटो देखाउने गरिएको हो ।

तेस्रो पटकः भूत, किसान वैद्य प्रेतात्मा, तारण राख्ने बज्राचार्य सहित लोकजन र यक्षलोकमा रहेका सबैलाई देखाएको हो ।[४०]

भोटो देखाउन सकिएपछि मच्छेन्द्रनाथ करुणामयलाई राजकीय सम्मानपूर्वक दक्षिणतिर फर्काइन्छ र खटमा राखी जात्रा गरी बुंगमतीमा लगिन्छ । तर बान्हवर्षे मेलामा भने मच्छेन्द्रनाथलाई त:बहालमै राखिन्छ । बुंगमतीमा लैजाने बेलामा मच्छिन्द्रनाथलाई जथाभावी अश्लील शब्दले गाली गरी लैजाने चलन छ । कोहीको भनाई छ बुंगमतीमा लैजान्दा पांजुहरुको लागि केही आम्दानी नहुने हुन्दा यसरी गाली गर्ने गरेको हो भन्ने गर्छ । त्यसैले पांजुहरु मच्छेन्द्रनाथलाई 'हेलाद्य:' पनि भन्ने गर्छन् । यसरी बुंगमतीमा लैजान्दा देउटासंगै जानेहरुले 'म नआएसम्म त्यानान त्यानान' भनि कराई लैजान्छ ।[४१]

मच्छेन्द्रनाथलाई बुंगमतीमा लगेको चार दिनपछि 'प्यन्हू विचा:' भनी काठमाडौंका तीनै शहरका भक्तजनहरु मच्छिन्द्रनाथलाई विचार पूजा चढाउन जान्छन् ।

## ३.१.३.४. रक्तावलोकितेश्वर मच्छेन्द्रनाथको बान्हवर्षे मेला

मच्छेन्द्रनाथको बान्हवर्षे मेला एउटा विशेष जात्रा मानिन्छ । सूर्य दक्षिणायण भएपछि मच्छेन्द्रनाथलाई बुंगमतीमा नै विराजमान गराइन्छ । प्रत्येक बान्हवर्षमा मच्छेन्द्रनाथको रथ जात्रा गर्दा मच्छेन्द्रनाथलाई बुंगमतीदेखि रथमा हालेर तानी पाटनको शँकरापुरको (ङखु छिकेगु) खोला तर्न लगाईन्छ । पाटनको शहरमा तान्दै ल्याइन्छ । बान्हवर्षे मेलामा बुंगमतीदेखि रथ तानेर ल्याउनु पर्दा बाटो, त्यति राम्रो नभएकोले धेरै दिन लाग्ने गर्थ्यो ।

यो बान्हवर्षको एक पटक बुंगमतीदेखि पाटनसम्म रथ तान्ने परम्परा ने.सं. ८०१ (वि.सं. १७३८/सन् १६८१) मा राजा श्रीनिवास मल्लको पर्यायदेखि भएको पाइन्छ । त्यो बेला बुंगमलोकेश्वरको रथ तानी ल्याउँदा थति टोलमा पुग्दा रथको आकासिं भाँचियो । यसरी विघ्न हुँदा शान्तिका लागि बोको बलि लिएको कुरा अभिलेखमा उल्लेख छ । यसरी समय-समयमा आकासिं भाँचिएको कुरालाई इतिहासमा उल्लेख छ । नुगल टोलमा तीन पटक, लगनखेलमा एक पटक आकासिं भाँचिएको अभिलेख पाइन्छ । कुनै वर्षत बान्ह पटकसम्म पनि आकासिं भाँचिएको थियो । यसबेला बुंगमलोकेश्वरकी आमा 'द्वलंभाजु' कहाँ दुइटा बोको बलि दिएको कुरा पनि इतिहासमा उल्लेख छ । यसरी नै ने.सं. ८०४ तिर पनि यसरी नै आकासिं भाँचिएको घटना छ ।[४२]

एक पटक बाह्र वर्षको मेलामा रथ तानि ल्याउँदा इकुहिटीको यूलाखेलमा रथलाई घुमाउँदा केही राक्षसहरु आई दुइटा कुकुरलाई डोरीले बाँधी कुनै आवाज नदिइकन रथलाई तानेर पुलचोकसम्म पुऱ्याएको ऐतिहासिक घटना छ । यस्तो घटना भएको आधारमा बाह्र वर्ष मेलामा रथलाई बाजागाजा नबजाइ यूलाखेलदेखि आधारातमा पुलचोकमा ल्याउने चलन छ ।[४३]

### ३.१.४. रक्तावलोकितेश्वर मच्छेन्द्रनाथको जात्राको विशेषता

नेपाल प्राचीनकालदेखि विविध प्रकारका जात्रा पर्वहरु भएको एउटा संस्कृतिले सम्पन्न देश हो । यहाँ बौद्ध धर्ममा आधारित सांस्कृतिक पर्व जात्राहरु धेरै छन् । परापूर्वकालदेखि यहाँ पर्व जात्राहरु प्रचलन भएको भेला पारिएको छ । यहाँ प्राप्त शिलालेखमा नेपाल मण्डललाई 'बुद्ध क्षेत्र' भनी लेखिएको पाइएको छ । यहाँको जात्रा र चाडपर्व मनाउँदा धार्मिक सहिष्णुताको आधारमा मनाउँदै आएका छन् । जात्राको उद्देश्य धार्मिक भावनामा आधारित भएतापनि यसबाट मानिसहरुले मनोरञ्जन गरी आनन्द पनि गर्दछन् । नेपालमा मच्छेन्द्रनाथको जात्रा अति महत्वपूर्ण छ । सबैको निमित्त यो जात्रा लोककल्याणकारीको रुपमा मनाउँदै आएको छ । मच्छेन्द्रनाथलाई नेपालमा ल्याउनु र उनको जात्रा चलाउनुको मूल उद्देश्य धानको बाली सपार्नको निमित्त वर्षाको आरम्भ गर्नलाई नै हो भन्ने मानिएको छ । आजसम्म करुणामय बुंगमलोकेश्वरबाट नै नेपालको रक्षा भइरहेको छ भन्ने जनधारणा छ । बुंगमलोकेश्वरको जात्रा प्रारम्भ बैशाख शुक्ल प्रतिपदादेखि ज्येष्ठ शुक्ल षष्ठीसम्म देवालीको पूजा हुन्छ । कुमार षष्ठी ( सिथिनख:) देवालीको अन्तिम दिन हो । प्राय: भोटो देखाउने जात्रा यही दिन पारिएको हुन्छ । यसरी विभिन्न महत्व भएका बुंगमलोकेश्वरको रथ जात्रा ललितपुर, भक्तपुर र काठमाडौंको भक्तजनहरुले मनाउँछन् । रथ जात्रा मनाउने क्रममा समस्त देशवासीहरु भेला भइ बाजागाजा बजाई, गीत गाई, विभिन्न गुठीगणका भोज भत्यार चलाई इष्टमित्र डाकी रमझम गरी मनाउँदछन् । विशेषत: पाटनको महत्वपूर्ण जात्रा रातो मच्छेन्द्रनाथको जात्रा हो । यसले राष्ट्रिय मान्यता पाएको छ । भोटो देखाउने बेलामा राष्ट्रनायक राजाको समेत सवारी हुन्छ । उपत्यका भरि सार्वजनिक बिदा हुन्छ । बुंगमलोकेश्वरको भोटो जात्राको आफ्नै ठूलो विशेषता छ ।

#### ३.१.४.१. रक्तावलोकितेश्वरको जात्रामा बजाइने बाजाहरु

नेवार संस्कृतिको एउटा विशेषता जात्रामा बजाइने बाजा हो । करुणामय मच्छेन्द्रनाथको रथजात्राको केही दिन अघिदेखि कसाहीहरुले नाय्सिं बाजा बजाई गाउँ

घरमा, शहरको टोल-टोलमा गई अब करुणामय लोकनाथको जात्रा शुरु हुने भएको छ भनी खबर पुऱ्याउने परम्परा थियो । यसरी रथयात्राको पूर्व घोषणा गर्नुलाई नेपाल भाषामा 'नाय्सिं च्वय्केगु' भनिन्छ । जात्राको राजकीय सूचना दिन चोक-चोकमा दबुलीमा बसी नाय्सिं च्वय्केगु भनी सूचना दिने व्यवस्था थियो । नाय्सिं च्वय्केगु भनी सूचना दिंदा यस्तो भाषा बोल्दछ ।

'हे प्रजा भाजु मय्जुपिं थनी....
न्हूत्वा लोकनाथ करुणामययागु जात्रा जुइगु
फुम्हसिनं फुथे जात्रास निभा: सुनानं किय् मदु
लँपु ज्वने मदु, सप: ज्वने मदु
याय् मज्यूगु ज्यायात धा:सा भारी दण्ड जुई ।
भारी सजाय जुइ महाराजया हुकूम ख: ।[४४]

(हे प्रजाजनहरु, अब आउने यति दिन भित्र लोकनाथ करुणामयको जात्रा हुनेछ । सक्नेले जात्रामा घाम छेक्न पाइदैन, जीउ समात्न पाइन्दैन, चुल्ठो समात्न पाइदैन, गर्न नहुने काम गरेमा भारी दण्ड हुनेछ भनी महाराजबाट हुकुम भएको छ ।)

मच्छेन्द्रनाथको रथजात्राको आह्वान दिन अगाडि आठ र पांच दिन अगाडि तीन दिनसम्म पाटनमा नाय्सिं सुनाउनु पर्ने चलन छ ।

मच्छेन्द्रनाथको रथजात्रामा श्रृंगभेरी (भैंसीको सिंगको बाजा) बजाउने परम्परा छ । विभिन्न बाजाहरु बजाउने क्रममा पाटनका मुलियाहरुले नुगलको जात्रामा, च्यासल टोलका बासिन्दाहरुले गा:बहाल, लगनखेलमा र अन्य ठाउँमा 'काहा' बाजा बजाउने चलन छ ।[४५]

मच्छेन्द्रनाथको रथ तान्दा निकै आकषर्क बाजाहरुमा त्यसबेला बजाउने ठूल-ठूला धिमे बाजा हो । धिमे बाजाको तालमा नाच्ने पनि गर्दछन् ।[४६] यस्तै कोताखिंसंगै पञ्चताल बाजा बजाउनु ललितपुरको बुंगमलोकेश्वरको त:बहालको सयौं वर्ष अगाडि देखिको परम्परा हो भन्ने कुरा ने.सं. ७९३ को राजा श्रीनिवास मल्लद्वारा स्थापित शिलालेखमा यसरी उल्लेख छ:

"श्री ३ बुंग इष्ट देवता स्थान याचके.......पञ्चतार (लं) बाय थाये भुय स्वगूर हानं थुगु स्वंगू जात्रा उत्सव............१. गाबाहाया जात्रा, २. नुगरया जात्रा, ३. लगंया जात्रा पञ्चतार वाद्य थास्य आरती छोयके मागु जुल ।[४७]

(श्री ३ बुंगम इष्ट देवताको स्थानमा तीनै स्थानको गाबहाल, नुगल लगनखेलमा जात्रा हुन्दा पञ्चतालमा आरती बाली बाजा बजाउनु पर्ने चलन छ ।)

मच्छेन्द्रनाथको एक लोकगीतमा मृदंग बाजा बजाउने उल्लेख छ :
'लोकनाथ चरणस भजननी याय्
धवताल मृदंग थाङाव ॥[४८]

बज्रयानी गुरुहरुले पनि बौद्ध क्रिया पद्धति अनुरुप पूजाआजा गर्दा लोकनाथको अगाडि ता:' (एक प्रकारको बाजा) बजाई स्तोत्र पाठ गर्दछन् ।

### ३.१.४.२. रक्तावलोकितेश्वर मच्छेन्द्रनाथको जात्रामा स्तोत्र पाठ गर्ने परम्परा:

सबैलाई करुणा राख्ने करुणावतार मच्छेन्द्रनाथको आराधना गर्न स्तोत्र पाठ गर्ने चलन छ । प्राचीन कालदेखि नै लोकनाथ करुणामय सम्बन्धी स्तोत्रहरु लिखित रुपमा भेटिएका छन् । यो जात्राको सम्बन्धमा सबभन्दा पहिले वन्धुदत्त बज्राचार्यले स्तोत्र रचना गरेका थिए । त्यसपछि राजा नरेन्द्र देवले स्तोत्र बनाए भने भरिया भएर गएको रथचक्रले पनि स्तोत्र रचना गरेको थियो । यति मात्र होइन मच्छेन्द्रनाथको जात्रामा देव दैत्यादि यक्ष राक्षस, गण र भूत प्रेतहरुले पनि स्तोत्र पाठ गर्थे भन्ने धारणा छ । रथ जात्राको बेला बिहान सबेरै दैव, दैत्य, ऋषिगण आदि स्तोत्र पदन आउन्छन् । टोल टोलका स्थानीय मानिसहरु अझै पनि स्तोत्र पाठ गर्न आउने गर्छन् । देवजात, दैत्यजात र मनुष्यजात सबै वर्गले स्तोत्र पाठ गर्दै ठूलो श्रद्धाले मान्ने देव देवतामा लोकनाथ निकै प्रसिद्ध छ ।[४९]

मच्छेन्द्रनाथको स्तोत्र सम्बन्धमा भट्टारक चरपतिपादले श्री आर्यावलोकितेश्वरको २४ श्लोक भएको पाद स्तव: लेखिएका थिए । आफूले गरेका सबै पाप मोचन गर्न संसारका लोकजनको हित गर्नका लागि स्तोत्र रचना गरेका थिए ।[५०]

मच्छेन्द्रनाथ नेपालमा ल्याउने बन्धुदत बज्राचार्यले आफै हातले करुणामय स्तोत्र: लेखेका थिए । उक्त स्तोत्रमा लोकनाथ पद्मपाणी लोकेश्वरको सम्पूर्ण गुण र रुपको बयान गरिएको छ । त्यो स्तोत्रलाई आजकाल स्तुतिको रुपमा (तुत:) लोकनाथ अगाडि लाइनमा उभिई गाउने गर्दछन् ।[५१]

मच्छेन्द्रनाथलाई नेपालमा ल्याउने राजा नरेन्द्रदेवले पनि मच्छेन्द्रनाथको स्तोत्र रचना गरेका थिए । यसमा श्री आर्यावलोकितेश्वरको रुप र गुणको वर्णन छ । यसमा

लोकेश्वरको गुण वर्णन गरी लेखिएको थरीथरीका स्तोत्रहरु छन् । जसमा दशवल शक्तिको चर्चाबारे बयान गरिएको छ ।[५२]

मच्छेन्द्रनाथको जात्रा र अन्य पर्वमा सबभन्दा पहिले स्तोत्र वाचन गर्नेहरुमा गुजिबहालका बज्राचार्यहरु हुन् । यिनीहरुले देवजातिको प्रतिनिधित्व गरी स्तोत्र पढ्ने गर्छन् । यसपछि स्तोत्र वाचन गर्नेहरुमा हिडिम्वाबहालका न्हूगःका प्रेतहरु हुन् । यिनीहरुले दैत्य जातिको स्तोत्र वाचन गरी प्रतिनिधित्व गर्दछन् । यस्तै तेस्रो समूहमा स्तोत्रवाचन गर्ने पालो इथावहाल लुँखुसिका मूलपतिहरुका हुन् । यिनीहरुले मनुष्य जातिको स्तोत्र पढी प्रतिनिधित्व गर्दछन् । यस्तै मच्छेन्द्रनाथको रथ नुगल टोलमा पुग्दा त्वायबाय् आजुको अगाडि स्तोत्र वाचन गर्ने परम्परा छ । यसबेला षट्पारमिताको स्तोत्र पाठ गरिन्छ । त्वायबाय् आजुलाई मच्छेन्द्रनाथको मीतको रुपमा मानिन्छ ।[५३]

स्तोत्र पाठ गर्नु भन्दा पहिले मच्छेन्द्रनाथको रथ तान्नु पर्दछ । रथ तान्ने बेलामा पनि स्तोत्र पाठ गरिन्छ र मच्छेन्द्रनाथलाई फर्काउदा पनि स्तोत्र पाठ गर्नु पर्छ । धेरै स्तोत्र तथा लोकगीतहरु रचना गरिन्छन् ती रचनाहरु सम्पादन गरी प्रकाशित भएका छन् । मच्छेन्द्रनाथको आराधना गरी शाहराजा श्री ५ सुरेन्द्र बिक्रमबाट नेपालभाषामा रचना गरिएको बुंगमलोकेश्वरको गीत निकै प्रचलित छ ।[५४]

मच्छेन्द्रनाथ सम्बन्धी धेरै चर्यागीतहरु पनि फेला पारेका छन् । आर्यावलोकितेश्वर करुणामयको राग तालमा एक चर्यागीतको प्रथम चरण यस्तो छ :

नमामि नमामि श्रीकरुणामय
लोक उधारित दुःख नासिता ॥[५५]
यस्तै अर्को एउटा चर्यागीत यस प्रकार छ :
'प्रणमामि बुंगमलोकेश्वर
कनकरत्नमणि हार विभूषिता ॥[५६]

### ३.१.४.३. रक्तावलोकितेश्वर मच्छेन्द्रनाथका गुठीहरु

मच्छेन्द्रनाथको इतिहास लामो छ । मच्छेन्द्रनाथको सेवा शूश्रुसा गर्न, जात्रा चलाउन र संरक्षण गर्न गुठीद्वारा शाक्य पांजुहरुको व्यवस्था गरिएको छ । मच्छिन्द्रनाथका पुजारीहरुलाई विशेष आदर गरी पांजु (पानेजु वा षटाजुं) भन्ने गरिएको छ । आजकाल कुल ३१ घरका पांजुहरु पुजारी हुने गर्छन् । यिनीहरुले नै मच्छिन्द्रनाथको नित्यपूजा गरी

रेखदेख गर्दै आएका छन् । यिनीहरुले आफूहरु एकतिस परिवार र देवता समेत ३२ परिवारका सन्तानमा रुपमा गणना गर्ने गर्दछन् ।[४७] श्री पाजुंहरु मच्छेन्द्रनाथको मन्दिरमा रहँदा र जात्रामा रथको खटमा रहँदा रातो जामा धोति लगाई फेटा बाँडी बस्ने गर्छन् ।

मच्छेन्द्रनाथको रथ प्रत्येक वर्ष राष्ट्रिय मान्यताका साथ भव्य रुपले गरिन्छ । वर्षेनी अनेक पूजा, पर्व र जात्राहरु मनाउन प्रशस्त आयस्ता र जग्गा जमीनको व्यवस्था गरिएको छ । श्री ५ को सरकारले यी आयस्ता र सम्पतिको सुरक्षा गर्न एउटा छुट्टै गुठी अड्डाको व्यवस्था गरी हेरचाह गर्ने व्यवस्था गरेको छ । तर भूमिसुधारको नीतिले गर्दा गुठीको जग्गाहरु रैकरमा परिणत गर्ने कानूनी प्रावधान भएकोले गुठीको जग्गा जोताहाको नाममा रहन गएका छन् । जसले गर्दा यी जग्गाहरु धेरै जसो हराएका छन् । पहिले धर्मकर्मको लागि राखिएका जग्गाहरुको आयस्तामा गोलमाल हुन जाँदा यसको राम्रो सदुपयोग हुन सकेन । धर्म लोप भएपछि धेरैजसो जग्गाहरु व्यक्तिगत सम्पत्तिमा परिणत भए ।

श्री ५ रणबहादुर शाहको राज्यकालमा देव देवताका जग्गाहरु हरण गरी सरकारले दाखिला गरेका थिए । मच्छेन्द्रनाथको जग्गा धेरै भएको देखि श्री ५ रणबहादुर शाहले हरण गर्न खोज्दा एक जना पांजु पुजारी राजाको अगि-अगि पछि-पछि लागि उनको पीछा गर्न छोड्दै छोडेनन् । यसबाट राजा हैरान मात्र होइन त्रस्त पनि भए । श्री ५ रणबहादुर शाहले डराई हुकुम भयो "तँ बाँडाको खेत लिन्न जा" राजाबाट यस्तो के हुकूम भएको थियो । त्यो पांजु पुजारी त्यहीं अन्तर्ध्यान भए । मच्छेन्द्रनाथ नै पांजुको रुप धारण गरेर आएका हुन् भन्ने जनश्रुति छ ।[४८] मच्छेन्द्रनाथ जग्गा जमीन हराउँदै गएका छन् ।

बुंगमतीमा मच्छेन्द्रनाथको रक्षकको रुपमा एक भैरव छ । त्यस भैरव कुकुर पनि भन्दछन् । बुंगमती रहेका कुकुरहरुलाई एउटा सिंगै राँगाको मासु ख्वाई 'खिचाभू' भन्ने एक गुठीको व्यवस्था गरिएको छ । यस्तै पांजुहरुलाई गुठी अड्डाबाट स्याबजी र तःखाः (एक प्रकारको च्यूरा र थलथले मासु) राखी भोज ख्वाउनु पर्ने अर्को एउटा पांजु गुठी पनि छ ।[४९]

### ३.१.४.४. शक्तिशाली रक्तावलोकितेश्वर मच्छेन्द्रनाथ

मच्छेन्द्रनाथको शक्ति निकै छ भनी भनिएको छ । एक पटक पाटनका राजा सिद्धिनरसिंह मल्लले मच्छेन्द्रनाथलाई हेला गरी भने "यो मच्छेन्द्रनाथले आदि अन्त्य

कसैलाई थाहा हुन्न ।" यसरी भन्नुको कारण यिनी ६ महिना बुंगमती र ६ महिना ललितपुर त:बहालमा रहन्छन् । यिनी पांजु बाँडाका 'वरेद्यो' भनिन्छ यस्तै एक समय श्रीनिवास मल्लले मंगलबजारको राजदरबारबाट नजिकबाट बुंगमलोकेश्वरको रथ तानेर ल्याउँदा पनि उनले मच्छेन्द्रनाथको दर्शन गर्न नगइकन आफूले स्थापना गरेको श्री कृष्ण मन्दिरमा गई श्रीकृष्णको दर्शन गर्न गए । तर राजाले मन्दिरभित्र भगवान कृष्णको ठाउँमा करुणामय मच्छेन्द्रनाथको मूर्ति देखे लगत्तै त्यहाँबाट उनी रथमा रहेका मच्छेन्द्रनाथको दर्शन गर्न गए । रथमा उनले श्रीकृष्ण भगवानलाई देखे । यो देखी राजा सिद्धिनरसिंह निकै प्रभावित भए । उनले आफ्ना आराध्य देवता श्रीकृष्ण भगवान र मच्छेन्द्रनाथमा कुनै भेद नभएको देखे । करुणामय मच्छेन्द्रनाथको यस्तो विराटस्वरुप देखेर वर्षेनी मच्छेन्द्रनाथको रथ राजदरबार अगाडि आइ पुगेपछि रथमा झुन्ड्याउने लामो ध्वजा (पता:) चढाउने व्यवस्था गरे । आजसम्म पनि मच्छेन्द्रनाथको रथ राजदरबारमा पुग्दा सरकारी पूजाका राजध्वजा चढाउने गर्दै आएको छ ।[६०]

मच्छेन्द्रनाथको रथ जात्रामा रथ भाँचिने, बिग्रिने आदि अनिष्ट भएमा त्यस वर्ष देशमा अनावृष्टि हुने रोग फैलिने र राजालाई कुनै अनिष्ट हुने गर्दछ । यस्तो अवस्थामा देशमा कुनै किसिमको दुर्भिक्ष नहोस भनी क्षमापूजा गर्ने चलन छ । उदाहरणका लागि वि.सं. २०१५ सालमा मच्छेन्द्रनाथको रथबाट बाय्मो गजूर राख्न नपाउँदै खस्दा यसको फलस्वरुप देशमा राजनीतिक परिवर्तन भएको थियो ।

## ३.२.१. जटाधारी लोकेश्वर (मीननाथ) को परिचय

लोकेश्वरहरुको वर्णन गर्दा रातो मच्छेन्द्रनाथ अर्थात् रक्तावलोकितेश्वरको साथसाथ जटाधारी लोकेश्वर मीननाथको पनि बयान गर्नु सान्दर्भिक हुन्छ । मीननाथलाई नेवारहरु 'चाकवाद्यो' 'चक्वा द्यो', आदि भन्ने गर्दछन् । १०८ लोकेश्वरहरुमा यिनलाई जटाधारी लोकेश्वरको रुपमा गणना गर्ने गरिएको छ । मीननाथलाई कसैले मच्छेन्द्रनाथको पिताको रुपमा पनि मान्ने गरिएको छ । कसैले यिनलाई चौरासी सिद्धहरु मध्ये एक सिद्धको रुपमा मान्ने गरेका छन् ।

जटाधारी लोकेश्वर त्रिलोकको उद्धार गर्ने देवता हुन् । यिनको वर्ण रातो छ । सानो सलक्क परेको मुखाकृति छ । यो मूर्ति दुई हातपूर्णकद भई डेढ फुटको सुन्दर कलौटे मूर्ति हो । यस मीननाथको मूर्तिको शिरमा अभिताभ बुद्धको सानो मूर्ति छ । मीननाथको मूर्तिमा अनेक वस्तु र आभूषणले सिंगारिएको छ । शिरमा रत्नमुकुट, घाँटीमा चाँदीका नागमाला र अन्य विभिन्न गरगहनाले सुसज्जित छ । हातमा कमलको फूल लिइ राखेको छ । यस देवतालाई निरामेष पूजा चल्दछ । महायानी धर्म अनुसार मीननाथ बोधिसत्वको रुपमा पितृलोकको राजा यमराजको प्रतीक मानिएको छ ।

मीननाथको मुख्य विशेषता यस प्रकार छ । यिनी मानव मात्र होइन समस्त प्राणीलाई नै समान रुपमा सृष्टि गर्ने सृष्टिकर्ता हुन् । यिनले सृष्टि भएकाहरुलाई राग द्वेष, मोह र भयबाट मुक्त गर्दछन्, उपद्रवलाई शान्त गर्दछन् । परलोकको यातनाबाट हटाउँछन् । कर्मको भोगको फल नरक जानबाट बचाई दिन्छन् । मुक्तिको बाटोमा लैजान्छन् ।[६१]

## ३.२.२. जटाधारी लोकेश्वर मीननाथको उत्पत्ति

जटाधारी लोकेश्वर मीननाथको उत्पत्ति सम्बन्धमा एक पौराणिक कथा छ । परापूर्वकालमा द्वापर युगको अन्त्यतिर लिच्छवि शासन कालमा वृषदेव नाम गरेको राजाले राज्य गर्दथे । राजा वृषदेव दिनहुँ बज्रयोगिनीको दर्शन गरेर मात्र खानपान गर्दथे । एकदिन लगनको स्थूरको चैत्य दर्शन गर्दागर्दै राजा अचानक अचेत हुन गई मूर्च्छा परे । सोही बेला यमदूतका दूतहरुले राजालाई यमपुरितिर लगे । उक्त यमपुरमा श्री आर्यावलोकितेश्वरबाट पापीहरुको उद्धार गर्न लागेका थिए । यस अवस्थामा श्री करुणामय जटाधारी लोकेश्वरले आफूले स्नान गरेर भिजेको जटाबाट पानी निचोडी पापीहरुलाई जल खुवाई उद्धार गरेको दृश्य राजाले देखे । यस्तैमा त्यहाँ गुणकाण्डब्यूहको सूत्र पाठ गरि रहेको पनि देखे । राजालाई यमपुरीमा आउने बेला भएको छैन भनी पृथ्वीमै फर्काइ दिए ।

राजा वृषदेवले श्री आर्यावलोकितेश्वरको भावभक्ति गरी आफ्नो दरबारमा काण्डब्यूह सूत्र पाठ गर्न लगाए । दरबारमा पनि यमलोकमा देखेको उही करुणामय मीननाथको दर्शन गर्ने इच्छा भएकोले आफूले देखे अनुसारको जटाधारी लोकेश्वरको मूर्ति बनाई स्थापना गरे । राजदरबारको एक कुनामा धर्मराजको नाम (यमपूरी) राखी एउटा अर्को मूर्तिको पनि स्थापना गरे ।

राजा वृषदेवको मृत्यु भएपछि उनको भाई बालाचरण राजगद्दीमा बसे । देशको अवस्था बिग्रन्दै गएपछि राजा बालाचरण राजदरबारमा स्थापित जटाधारी लोकेश्वरको मूर्ति समेत लिई चक्रवर्ण महाविहारमा (चक्रम महाविहार वा चकंबाहा (टंगल) बस्न गए । एकदिन राजाले जटाधारी लोकेश्वरीको सपना देखे । उक्त जटाधारी लोकेश्वरले त्यहाँ नबस्ने मनसाय प्रकट गरे । साथै सपनामा उक्त देवताले राजालाई भने 'बिहान सबेरै उठेर हेर्दा एउटा चरा जहाँ बस्छ त्यहाँ एउटा विहार बनाइ दिनु भनी उक्त देवताहरु अन्तर्ध्यान भए । भोलिपल्ट राजाले कौसीबाट हेर्दा एउटा चरा उत्तर दिशामा उडी एउटा रुखमा बसे । जोशीलाई देखाई राम्रो साइत हेरी त्यसै ठाउँमा मन्दिर बनाई



जटाधारी लोकेश्वर
( मीननाथ )

जटाधारी लोकेश्वरको मूर्ति बनाई स्थापना गरे । त्यो विहार ज्येष्ठवर्ण महाविहारको नामले प्रख्यात हुन पुग्यो । चरा बसेको विहारको देउटा भएकोले मीननाथलाई चक्वा द्यो वा चाक्वा द्यो भनी भने । उनी यही नामले प्रख्यात हुन पुगे । त्यसबेलादेखि राजा बालाचरणले जटाधारी लोकेश्वर मीननाथ चक्वा द्योको पनि रथ बनाई रथ तानी जात्रा गर्ने परम्परा बसाले । मीननाथलाई बैशाख शुक्ल चतुर्थीका दिन रथारोहण गराउने चलन बस्यो ।[६२]

मीननाथको रथ पनि रातो मच्छेन्द्रनाथको रथसंगै तानेर जात्रा गर्ने परम्परा बसालियो । मीननाथ लोकेश्वरको स्थापना गरिने अवसरमा श्रृंगभेरी बाजा बजाई मतया: जात्रा गर्ने चलन बसाल्यो ।[६३]

मीननाथको स्थापना सम्बन्धमा वंशावलीमा यस्तो कुरा लेखिएको छ । सत्ययुगमा यमराजले मत्स्य अवतार (मीन) लिई सुखावती भुवनबाट मर्त्यमण्डलबाट नेपाल आई मीननाथ लोकेश्वर भनी प्रख्यात भए । यस्तै अर्को एउटा कथा छ । कलिगत संवत् ३४०० अर्थात् वि.सं. ३५६ सालतिर सूर्यवंशी लिच्छवि राजा अंशुवर्माको राज्यकालमा यमराजले राजालाई मेरो मूर्ति बनाई स्थापना गर भनी सपना देखाए । राजाले यमराजको मूर्ति बनाई मीननाथ लोकेश्वरको नामाकरण गरि स्थापना गरे । त्यसै सालको चैत्र शुक्ल पक्ष अष्टमी तिष्य नक्षत्र आयुष्मान् योग वृहस्पतिवारको दिन मीननाथ लोकेश्वरको मूर्तिलाई जीवन्यास गरी प्राण प्रतिष्ठा गरे । त्यसबेला देखि मीननाथ लोकेश्वरको प्रत्येक वर्ष शाक्य बौद्धाचार्यबाट दशकर्म विधि गरी नित्याचरण गर्ने गुठी स्थापना भयो ।[६४]

### ३.२.३. जटाधारी लोकेश्वर मीननाथको जात्रा

रातो मच्छेन्द्रनाथ लोकेश्वरको झैं मीननाथ लोकेश्वरको जात्राको पनि आफ्नै विशेषता छ । पहिले-पहिले दलाछैं टोलको लोकेश्वर र स्वथको नारायणको रथ जात्रा हुन्थ्यो । मीननाथलाई पनि रथ बनाई तान्ने परम्परा थियो । पछि मच्छेन्द्रनाथलाई नेपाल ल्याएपछि क.सं. ३६९४ (वि.सं. ६५०) मा मच्छेन्द्रनाथको संगै मीननाथको पनि रथ तान्ने प्रचलन हुन गयो । अरु रथहरु तान्ने प्रथा बन्द भयो ।[६५]

#### ३.२.३.१. जटाधारी लोकेश्वर मीननाथको महास्नान

मीननाथको जल अभिषेक सम्बन्धमा यस्तो लेखिएको छ कि क.सं. ३६०० (वि.सं. ५५६) सालतिर पाटनका सूर्यवंशी लिच्छवि राजा वरदेवले आफ्नो राज्यकालमा

पाटन शहर बनाई ललितपतन नाम गरी नौ हजार घरको बन्दोबस्त गरी मीननाथको मन्दिर नजिक वायब्य भागतिर स्नानमण्डप बनाई ठाउँ-ठाउँको तीर्थस्थलबाट जल ल्याई वर्षेनी बैशाख महिनाको कृष्ण पक्षको प्रतिपदाको दिनमा दिउँसो मीननाथ मूर्ति राखेको ठाउँबाट बौद्धाचार्यहरुले बोकेर बाहिर ल्याई पश्चिमतिर मुख फर्काई स्नानमण्डपमा राखी राजाको उपस्थितमा तामाको गाग्रीले महास्नान (न्हवं) जल अभिषेक गरेका थिए । महास्नान गरिसकेपछि ब्रह्मकूप भनी तामाको भाँडामा राखी रंगारोहण ( रंगरोगन) गरिन्छ । यसरी रंगरोगन गरिने विधिलाई नेपाल भाषामा 'लँपु छाय्गु' भनिन्छ । तेन्ह दिनपछि त्रयोदशिका दिन मीननाथको मूर्तिलाई ब्रह्मकूपबाट निकाली वस्त्र र मुकुट पहिराई गरगहनाले सजाई आसनमा राखि बज्राचार्य गुरुजुहरुले विधि विधानपूर्वक यज्ञादि होम गरी जीवन्यास गरी प्राण, प्रतिष्ठा र दशकर्म विधि आदि गरिन्छ ।[६६]

## ३.२.३.२. जटाधारी लोकेश्वरको रथजात्रा

मीननाथको महास्नान सकिएपछि रथजात्राको लागि रथ तयार गरिन्छ। मीननाथको रथ मच्छेन्द्रनाथको रथ भन्दा केही सानो हुन्छ । मीननाथको रथ बत्तीस लक्षणले पूर्ण हुन्छ । दश भुवनको प्रतिक स्वरुप चौध हात अर्थात् एकाइस फुट उचाई भएको रथ बनाइन्छ । रथमा चार पांग्रा हुन्छन् । रथलाई भैरवको प्रतिक मानिन्छ । त्यस्तै रथको माझमा रहेको काठलाई नागको प्रतिक स्वरुप घ:मा भनिन्छ ।

मीननाथको रथ मच्छेन्द्रनाथको रथसंगै पुल्चोकबाट तानी तीन दिनसम्म गाबाहा, सुन्धारा र लगनखेलबाट तानी थति टोलमा पुऱ्याइन्छ । राती नरिवल खसाली ध्वजा: पताका चढाइन्छ । यति सकिंएपछि साइत हेरी मच्छेन्द्रनाथको रथसंगै जावलाखेल लगिन्छ । मच्छेन्द्रनाथको रथमा भोटो देखाउन सकिएपछि मीननाथको मूर्तिलाई खटमा राखी आफ्नै मूल स्थानमा (मगाइ) राख्न लैजान्छ ।



# आनन्दादि लोकेश्वर (आदिनाथ)

## ३.३.१ आनन्दादि लोकेश्वर (आदिनाथ) को परिचय

नेपालका प्रसिद्ध चार करुणामय लोकेश्वरहरुको नाम लिंदा चोभारका आनन्दादि लोकेश्वरको नाम पनि आउँन्छ । चोभारको लोकेश्वरलाई आदिनाथ लोकेश्वर पनि भनिन्छ । काठमाडौं शहरको दक्षिणतिर नखु खोलाको पश्चिममा चोभारको डाडाँ पर्दछ । चोभारको दक्षिणतिर जलविनायकको मन्दिर र टौदह छन् भने पश्चिमतिर कीर्तिपुर र पाँगाहरु पर्दछन् । चोभारको डाँड़ाबाट हेर्दा हिमालको श्रृंखला र चारैतिर रमणीय दृश्यहरु देखिन्छन् । यस्तो सुन्दर चोभार डाँडामा आदिनाथ करुणामयको मन्दिर स्थापना गरिएको छ । नेवार समुदाय करुणामय लोकेश्वरलाई 'चोबाहा द्यः' भन्ने गर्दछन् । नाथ योगीहरु (हठवादी) ले आदीनाथलाई मच्छिन्द्रनाथ र गोरखनाथको पनि गुरुको रुपमा लिएका छन् । यसैले नाथ योगीहरु आनन्दादि लोकेश्वरलाई सबैको गुरु भएकोले 'आदिनाथ' भन्ने गरेको हो भन्ने भनाइ छ । यस्तै विभिन्न लोकेश्वरहरुमध्ये योगक्रियाको बलले मानिसहरुको कुष्ठरोग आदि शारीरिक रोगहरु हटाई तन्दुरुस्ती दिने र मानसिक रुपमा सन्तुष्टि दिइ आनन्द दिने भएकोले यो लोकेश्वरलाई आनन्दादि लोकेश्वर भनी भनिएको हो ।[६७]

चोभारको आदिनाथको मूल विशेषता के हो भने डाँडामुनि रहेको सुलक्षण तीर्थमा स्नान गरी आदिनाथ करुणामयको नित्य दर्शन गरी पूजाआजा गर्नाले महारोग जस्तो भयानक रोग पनि निको हुन्छ । आनन्दादि लोकेश्वर शारीरिक रोग शमन गर्ने देवता हुन भन्ने जनविश्वास छ । सबैलाई निरोगी गरी आनन्द दिने करुणामय लोकेश्वर भएकोले यो देवताको प्रत्येक अष्टमीका दिन व्रत बसेमा पुण्य संचय हुनेछ । बौद्ध र हिन्दू श्रद्धालु भक्तजनहरु कार्तिक पूर्णिमा (सकिमिला पूर्णिमा) का दिन देखि पाँच दिनसम्म निर्मला व्रत बस्ने गर्दछन् ।

चोभारको आदिनाथ करुणामयको मूर्ति उत्तराभिमुख गरिरहेको छ । मूर्तिको उचाई करीब साल्हे तीनफुट छ, दाहिने हात वरद मुद्रामा छ भने देब्रे हात आव्हान मुद्रामा छ । आनन्दादि लोकेश्वरको मूर्ति रक्तवर्णको छ । आँखा ठूलो भई दुबै आँखाले माथितिर हेरेको आभास हुन्छ । यसरी माथि हेरेको कारणबारे अलग्गै जनश्रुति यस

प्रकार छ । परापूर्वकालमा नन्दग्वालको मद्दतले विहारको प्रतिष्ठापन गर्न बोकेर ल्याउँदा चोभारको डाँडा कति अग्लो छ भनी माथितिर हेरेकोले उनको आँखाले माथि हेर्ने गरेको हो भनिन्छ ।[६८]

आदिनाथ विराजमान भएको चोभार विहारको नाउँ धेरै छन् जस्तै कच्छपाल गिरि महाविहार, सुवर्णगिरि महाविहार, गन्धावती महाविहार, असना लोकेश्वर महाविहार आदि हुन् । असना लोकेश्वर महाविहार अंकित शिलालेखमा विहारको नाम अगाडि 'श्री इन्द्रदेव संस्कारित' भनी उल्लेख भएको छ । शायद यो विहार वि.सं. ११८१ देखि ११९३ सम्म शासन गर्ने राजा इन्द्रदेवले विहार निर्माण गरेका थिए र पछि राजा श्री निवास मल्लले जीर्णोद्धार गरेका हुन सक्ने उक्त शिलालेखबाट पुष्टि हुन्छ ।[६९]

### ३.३.२ आनन्दादि लोकेश्वरको उत्पत्ति

(१) आनन्दादि लोकेश्वर (आदिनाथ) को र महत्व उत्पत्ति सम्बन्धमा 'नेपाल महत्म्य' मा यसरी उल्लेख भएको छ । कृष्णका छोरा अनिरुद्धले कच्छपासुरलाई मारेको डाँडा भएकोले यस डाँडाको नाम 'कच्छपाल गिरि' भएको हो । यो कच्छप शब्दको पर्यायवाची शब्द कुर्म पनि भएकोले यस डाँडालाई कुर्मगिरि वा 'कुर्म पर्वत' पनि भनिन्छ । चोभारलाई गन्धावती भनी स्वयम्भू पुराणमा उल्लेख भएको छ ।[७०]

कच्छपालगिरिमा विराजमान भएका लोकेश्वरको मान्यता केवल आनन्दादि लोकेश्वरमा मात्र सीमित नभई बौद्ध महायान मतानुसार यिनलाई आदिबुद्ध स्वयम्भूको धर्मकारको रुपमा मानिएको छ । विशेषगरि आदिनाथलाई भीमकायका रुपमा पनि मान्ने गरिएको छ । यसै आदिनाथलाई नेपालमा मात्र होइन विश्वका शैव समुदायले हठयोग विधामा यसलाई गुरुको रुपमा पनि मानिएको छ । यस अवलोकितेश्वरको शक्तिको विषयमा यसरी उल्लेख छ- अवलोकितेश्वरको आँखाबाट नारायण र दाँतबाट वाणीकी देवी सरस्वती आदिको सृष्टि गर्न सहयोग भएको छ ।[७१]

(२) स्वयम्भू पुराण अनुसार द्वापार युगको अन्त्यमा महामञ्जुश्रीबाट चन्द्रहास खड्ग प्रहार गरी कच्छपाल पर्वतलाई दुइ टुक्रा पारे । त्यहाँबाट पानी सुकेर गए पछि यो डाँडाको नाम कापोतल पर्वत हुन गयो । त्यसबेला त्यहाँ एउटा मूर्ति पनि फेला पारियो । यस मूर्तिको आँखाले कच्छपालगिरितिर हेरिरहेकोले यस मूर्ति

त्यहीं बस्ने मनशाय भएको बुझिएकोले त्यस मूर्ति कापोतल पर्वतको शिखरमा स्थापना गरियो। यसरी माथि हेरिएको मूर्ति भएकाले यिनलाई 'चोय्भाय् या:म्ह प:' (माथि बस्ने ईशारा देखाएको) चोभाद्य: भनिएको हो।[७२]

(३) आदिनाथको सम्बन्धमा अर्को एउटा किम्बदन्ती यसप्रकार छ:

मञ्जुश्री र कश्यप बुद्ध नेपालमा आएर नागदहको पानी निकास खोलेर बाहिर पठाए। यहाँ बस्ती बसाले। मञ्जुश्रीले शहर बसालेको हुँदा यसको नाउँ 'मञ्जुपत्तन' रहन गयो। पछि यहाँ धर्माकरलाई राजा बनाएर राखे। एक जनालाई कर्मकाण्ड विधि सिकाएर पुजारी बनाए। त्यसपछि मञ्जुश्रीले आदिनाथको रुप धारण गरि त्यहीं रहे।

कलियुग आएपछि मञ्जुश्री र कश्यप बुद्धको महत्व बढ्यो। यिनीहरुको विषयमा देशमा प्रचार भयो। मञ्जुश्री र कश्यप बुद्धको मूर्ति स्थापना गरे। देशमा कोलाहल मच्चियो पुजारीहरुले देवतालाई राम्ररी पूजा गरेनन् कि भनी शंका बढ्यो। बूढो पुजारी एकजना मात्र बाँकी राखे र अरु सबैलाई मारि दिए। यो देखि बूढो पुजारी सार्है रिसाए। उनले रीसको झोकमा कश्यप बुद्धको मूर्ति शान्ततीर्थमा र मञ्जुश्रीको मूर्ति जयतीर्थमा फ्याँकि दिए। उक्त दुई मूर्तिमा कश्यप बुद्धको मूर्तिलाई शान्ततीर्थमा पाटनका हेमकर्ण बज्राचार्यले 'हेमकर्ण महाविहार' वा हिरण्य वर्ण महाविहार निर्माण गरी क्वाबहालमा स्थापना गरी दिए। यस्तै मञ्जुश्री आदिनाथको मूर्ति सुवल आचार्यले जयतीर्थमा पाई उक्त मूर्तिको जीवन्यास गरी कच्छपालगिरिमा ल्याई आनन्दादि लोकेश्वरको रुपमा पुन: स्थापना गरे। उक्त मूर्ति फेला पारेको चैत्र शुक्ल अष्टमीको दिनमा प्रत्येक वर्ष महास्नान (न्हवं) गराई जात्रा गर्ने व्यवस्था मिलाए। चैत्र शुक्ल नवमिका दिन रथ यात्रा गर्ने प्रथा शुरु गरे। पहिले-पहिले यो रथ यात्रा चोभार देखि कान्तिपुरसम्म ल्याई जात्रा गर्ने गरिन्थ्यो।[७३]

(४) देवमाला वंशावली अनुसार आदिनाथको स्थापना राजा अंशुवर्माले गरेको हो। कलिगत संवत् ३४०३ मा राजा अंशुवर्मालाई श्रीकर्मराजले मेरो मूर्ति बनाइ देऊ भनि सपना देखाएकाले बौद्ध मत अनुसार धर्मराजको आनन्द स्वरुप मूर्ति बनाई चैत्र शुद्धि नक्षत्रका दिन चोभारमा आदिनाथको प्रतिष्ठा गरी बौद्धाचार्यबाट नित्याचरण गर्ने गरिएको हो। चैत्र शुक्ल अष्टमीको दिनमा वर्षवर्धनले बागमती र प्रभावतीको संगम भएको स्थानमा स्नान गर्ने रीत बसाले।[७४]

चोभारका आदिनाथ र गन्धेश्वरको गणेशको उत्पत्ति सम्बन्धमा यस्तो एउटा घटना भएको उल्लेख छ:

एकपल्ट ओडियानाचार्यले कच्छपालगिरि (चोभार) मा समस्त देवताहरूलाई निमन्त्रणा गरी एउटा ठूलो यज्ञ गरे । तर गणेशलाई बोलाउन बिर्से । गणेशले आफूलाई नबोलाएको रिसले यज्ञमा विघ्न गरे । यो देखेर पद्मपाणि लोकेश्वरले क्षितिगर्भ बोधिसत्वलाई यज्ञस्थलमा पठाए । क्षितिगर्भ बोधिसत्वले गणेशद्वारा भएको विघ्न शमन पार्न विघ्नातकको उत्पत्ति गरे । विघ्नातकले यज्ञमा भएको विघ्न बाधा हटाए । त्यसबेला देखि कुनै पनि पूजा गर्दा गणेशलाई पनि पूजा गर्नु पर्ने परम्परा बसाले । क्षितिगर्भ बोधिसत्व आफ्नो आत्माको चिन्हको रुपमा ओडियानाचार्यले यज्ञ गर्दा स्थापना गरेको छाता ओढी आफ्नो लोकमा फर्के । यही छाताको नाममा गन्धेश्वरको भनी प्रख्यात भयो । पछि ओडियानाचार्यले यज्ञ गरेको कच्छपालगिरिमा बस्ती बसाउन आनन्दादि लोकेश्वरको मूर्ति स्थापना गरिदिए ।[७४]

(६) चोभारको आदिनाथको सम्बन्धमा अहिलेसम्म प्राप्त भएको सबभन्दा पुरानो ऐतिहासिक सामाग्री ने.सं. ७६१ (ई. १६४१) र ने.सं. ६७८ को ताडपत्रमा 'श्रीमत् श्री श्री चोभाहार भनी उल्लेख भएको देखिन्छ ।[७५]

(७) ने.सं. ७६७ मा सिद्धिनरसिंह मल्लको पालामा उनका छोरा श्रीनिवास मल्ल चोभारमा आइ आदिनाथको तीन तल्ला भएको मन्दिर बनाई अहोरात्र होम गरेको थियो ।[७६]

(८) आदिनाथ मन्दिर अगाडि ने.सं. ९१३ मा राजा रणबहादुर शाहले ईंटाले छापेको थियो ।[७७]

### ३.३.३ आनन्दादि लोकेश्वर (आदिनाथ) को जात्रा

नेपालमा आनन्दादि लोकेश्वरको जात्रा चलेको इतिहास छ । यस करुणामय सम्बन्धी पौराणिक मान्यता यसरी रहि आएको छ । आनन्दादि लोकेश्वर संसारका सबै मानिसहरूलाई निरोगी बनाई आनन्द दिने भएकोले प्रत्येक वर्षको चैत्र शुक्ल अष्टमीका दिन ठूलो जात्रा चलाउने गरिएको छ । यस्तै कार्तिक महिनाको मुख: अष्टमीका दिनमा पनि ठूलो मेला हुन्छ । मेलाको अन्तिम दिनमा निर्जला व्रत बस्ने गरिन्छ । पाँच दिनसम्म

निर्जला व्रत बस्नेहरूले पाँच तीर्थको जल स्नान गरी आफूलाई शुद्ध गर्छन्। यो व्रत बसेमा जुनसुकै रोग पनि निको हुन्छ भन्ने जनश्रुति छ। यही कारणले श्रद्धालु भक्तजनहरूले यो देवताको श्रमण गरी भाँडाकुँडाहरु मन्दिरमा चढाउने गर्छन्। यस्तै मरी सकेका मान्छेहरूको नाममा सुखावती भुवनवासको कामना गर्दै १०८ द्वीप प्रज्वलन गर्छन्। कतिपयले सवालाख बत्ती बाल्ने गर्छन्। चोभारमा हुने धार्मिक एवं सांस्कृतिक पर्व र जात्रा विषयमा अध्ययन गरेमा धेरै महत्वपूर्ण कुरा देख्न सकिन्छ।

### ३.३.३.१ आनन्दादि लोकेश्वरको स्नान पर्व

आदिनाथ करुणामयको महास्नान (न्हवं) गरी जात्रा गर्ने परम्परा छ। कलियत संवत् ४०२० मा सूर्यवंशका राजा शिववर्माले मन्दिर निर्माण गरि दिएका थिए। यही देवताको प्रभावले नेपालमण्डलमा समयमा वर्षा हुने भयो। चैत्र शुक्ल प्रतिपदाका दिन करुणामय आदिनाथको महास्नान (न्हवं) गर्ने व्यवस्था गरे।[३८] आदिनाथको महास्नान गराउन अलग्गै मन्दिरभित्र एउटा चोकमा स्नानमण्डपको व्यवस्था गरिएको छ। ने.सं. १०९० मा स्नान मण्डपको जीर्णोद्वार गरेको शिलालेख पनि छ।[४०]

आदिनाथको महास्नान (न्हवं) चैत्र शुक्ल प्रतिपदाका दिन ज्योतिषीले साइत हेरी राम्रो दिनमा गरिन्छ। पाटनका त:बहालका वज्राचार्यबाट विधिपूर्वक श्री आनन्दादि लोकेश्वरको जीवन्यास निकाली ब्रह्मकूप प्रतिष्ठापन गरी श्री आनन्दादि लोकेश्वरलाई आसनबाट उठाई यसै विहारको पूर्वतिर अवस्थित स्नान मन्दिरबाट पश्चिमतिर मुख फर्काइ महास्नान गराइन्छ। यस दिन श्रद्धालु भक्तजनहरूले र दाताहरूले आनन्दादि लोकेश्वरलाई अर्पण गरेको गरगहना संरक्षणको निमित्त आफ्नो घरमा लगी नवमीका दिन फेरी आनन्दादि लोकेश्वरलाई चढाउन ल्याउँछन्। यो परम्परा अहिलेसम्म पनि चलिरहेको छ।

किम्वदन्ती अनुसार नन्दग्वालाले आनन्दादि लोकेश्वरलाई नेखु खोलाबाट ल्याई मन्दिरको दाहिने 'आगन घर' मा पहिले राखे जस्तै प्रतिपदाको दिन राती 'चाक: पूजा' गरिन्छ।

### ३.३.३.२ आनन्दादि लोकेश्वरको रथजात्रा

धेरै वर्ष पहिले महास्नान गराइ सकेपछि आनन्दादि लोकेश्वरको रथ जात्रामा रथ बनाई तान्ने परम्परा थियो। पछि कारणवश रथ तान्ने परम्परा बन्द भयो। तर

यसरी रथ तान्ने परम्परा बन्द भए तापनि परम्परा देखि मनाउँदै आएको 'दे भ्वय्' देशभोज अद्यापि चोभारबासीहरुले गर्दै आएका छन् ।

आनन्दादि लोकेश्वरको जात्रा मनाउने परम्परामा महास्नान पछि चैत्र शुक्ल द्वितीयाका दिन बिहान नखु खोला र बागमती नदीको संगम सुलक्षण तीर्थस्थलमा शुभमुहुर्तमा विहारको स्थविर आजुबाट द्रोणपुष्प दूध, दही, घ्यू, मह र सखर आदि पंचामृत राखी खोलामा सेलाइन्छ । यसलाई नेवारी भाषामा 'द्य: लायेगु' देवतालाई समाउने भनिन्छ । यही अवसरमा नन्दग्वालाको तर्फबाट आनन्दादि लोकेश्वरको दर्शन भएको यही निशाना हो भन्ने प्रमाण देखाउँछ । आदिनाथ लोकेश्वरको प्रतीक स्वरुप खोलामा बगिरहेको द्रोणपुष्प फुलहरु टिपेर कलशमा राखिन्छ । यसलाई 'द्य: लायगु' जात्रा भनिन्छ । त्यसपछि सुलक्षण तीर्थबाट लावालस्कर बाजागाजा साथ भक्तजनहरु थकालीले बोकेर ल्याएको पूर्णकलशसंगै चोभारको डाँडा उक्लेर आउँछन् । भक्तजनहरु अति श्रद्धाका साथ जात्रामा सहभागी हुन्छन् । कुन्दपुष्प सहितका कलश यसरी ल्याएको लाई नन्दग्वालाले पुन: लोकेश्वरलाई फर्काएर ल्याएको भनी सम्झन्छन् । कलश दिनभरि संगैको पाटीमा राखिन्छ र पछि विहारमा ल्याइन्छ ।

चैत्र शुक्ल द्वितीयाका दिन देखि आदिनाथ लोकेश्वरको मूर्तिमा रंगरोगन गर्ने कार्य शुरु हुन्छ । ललितपुरका थसिका नेमकुलहरुले ६ दिनसम्म रंगरोगनको काम गरिन्छ । यसरी रंगरोगनको कामलाई 'लँपु छाय्गु' रंगारोहण भनिन्छ ।

रंगरोगनको समाप्ति पछि आदिनाथ लोकेश्वरको मूर्तिलाई मन्दिरको दाहिने तर्फको इहीमण्डपमा विराजमान गराइन्छ । मडाजात्रा स्वरुप वज्रयानी वज्राचार्यहरुबाट दशकर्म संस्कारविधि शुरु गर्दछन् । यसपछि पंचाभिषेकको रुपमा वज्रसत्वको प्रतीक स्वरुप 'पंचबुद्धको मुकुट' पहिराइन्छ खटमा राखी विहारभित्र तीन पटक मण्डप परिक्रमा गराइन्छ । परिक्रमाको क्रममा विहारको तीन कुनामा राखिएको मण्डपहरुमा बिसाउने गरिन्छ । यसपछि भूतगण, सिंघिनी, व्याघ्रिणी, डाकिनी र दशदिकपालको क्षेत्रावली, बलिपूजा गरिन्छ । बलिपूजा गर्दा काहाबाजा बजाइने चलन छ । पंचदानको पनि काम हुन्छ । यति गरिसकेपछि नेकूजुहरुले लोकेश्वरको मूर्तिलाई बोकेर मन्दिरभित्र विधिवत रुपमा प्रतिस्थापन गर्दछन् । त्यसै दिन चोभारबासीहरुले 'भूज्याहा' भनी भोजन गर्ने चलन छ ।

आनन्दादि लोकेश्वरको जात्रा गर्ने क्रममा नवमीका दिन श्री गणेश र पीठमा गई बलिपूजा गरी 'मांसाहूति' पूजा गरिन्छ । यज्ञपछि जात्राको समाप्तिको लहरमा भोज खाने गर्छन् । आजसम्म पनि चोभारको जात्रा यस्तै क्रमले चल्दै आएको छ ।

चोभारको आदिनाथको रथ जात्रा सम्बन्धमा धेरै ऐतिहासिक अभिलेखहरु देखिन्छन् । गुणकाम देवभन्दा अगाडि राजा शंकरदेवको पालामा यो जात्रा सम्बन्धमा यसरी उल्लेख भएको पाइन्छ:

आनन्दादि लोकेश्वरको रथ जात्रा पशुपति क्षेत्रको देवपतन शहरसम्म लगी जात्रा गर्ने चलन चलाएका थिए । यसबेला बौद्ध मार्गीहरु पशुपतिमा आई आदिनाथ लोकेश्वर जात्रा चलाउने गर्दथे । आदिनाथलाई महास्नान गराई रथ जात्रा गरी कच्छपाल पर्वत दानगाल तीर्थमा चार दिनसम्म राख्ने चलन पनि थियो । यसरी परापूर्वकाल देखि चलाउँदै आएको चोभार करुणामयको जात्रा एक-एक गर्दै पछि हटाउँदै गयो । उक्त रथ जात्रा रोक्न गएको सम्बन्धमा एक किम्बदन्ती यस्तो छ ।

परापूर्वकालमा आदिनाथ करुणामयको रथ चोभारदेखि तानेर लैजान्दा दानगाल खोलामा आठ दिनसम्म रथ गाडिन गई निकाल्नै सकिएन । त्यसबेला नेपाल र भोटबीच लडाइँ चल्दै थियो । त्यसै समयमा रातमा भोटका सेनाहरु काठमाडौंमा घुम्न आइरहेको बेला एउटा सुन्दरी युवतीलाई देखेर सेनाहरुले बोकेर साँखुबाट भोटतर्फ लगे । वास्तवमा उक्त युवती रथबाट ओर्ली आदिनाथ लोकेश्वर स्वयम युवतीको रुप धारण गरी घुम्न आएका थिए । पछि उक्त युवतीमा अद्भुत शक्ति रहेको जस्तो ठानी राम्ररी केलाई हेर्दा करुणामय लोकेश्वर हो भनी थाहा पाए । भोटका सेनाहरुले उक्त युवतीको जीवखिंची आदिनाथ करुणामयको मूर्तिमा सारी यसलाई 'धुरज्य लोकेश्वर' वा 'संगु धञ्ज्य लोकेश्वर' नामाकरण गरी केरुङ्ग पुऱ्याइ मूर्ति बनाई तन्त्रमन्त्रले साधना गरी कहिल्यै नफर्कने गरी तारण गरी राखे । नेपालका भक्तजनहरु उक्त आदिनाथ करुणामय कता हराए भनी यताउता खोज्न थाले । रथमा मूर्ति नहुँदा जात्रा गर्न नसकिने भयो । नित्यपूजासम्म गर्न पाएन । यसरी आदिनाथ करुणामयको रथ तान्ने परम्परा बन्द भयो । उता भोटका राजालाई निकै पेट दुख्न थाल्यो र सैनिकहरु पनि बिरामी भए । केरुङ्गमा स्थापित करुणामयलाई तारण निकाली काठमाडौं फर्काइए । त्यसबेला देखि नेपालमा आदिनाथ करुणामयको रथ तान्ने जात्रा भने चलाउन सकिएन । कलिगत संवत् ४१२५ मा शुरु गरिएको रथ यात्रा बन्द भयो ।[८१]

वंशावलीको एक ठाउँमा यसरी उल्लेख भएको छ मध्यकालमा राजा शंकरदेव (ई.सं. ९२०) र गुणकामदेव (ई.सं. ९८७) को पालामा आदिनाथको रथ जात्रा सेतो मच्छेन्द्रनाथ संगसंगै गर्ने परम्परा छ। चैत्रशुक्ल अष्टमीका दिन शुरु गरी असनमा तीन दिनसम्म राखी जात्रा गर्ने परम्परा छ।[८२]

## ३.३.४ आनन्दादि लोकेश्वरको विशेषता

सबैलाई आनन्द दिइ रक्षा गर्ने देवता भएकोले आनन्दादि लोकेश्वर भनिएको हो। हाल आनन्दादि लोकेश्वरको रथ तान्ने परम्परा नभए पनि यसको आफ्नै किसिमले जात्रा मनाउने गर्दछन्। भक्तजनहरुले करुणामयलाई विभिन्न तरिकाले महत्व दिँदै मान्ने गरेका छन्। आषाढमा जीर्णोद्वार गुठीले मन्दिर बनाउने, श्रावणमा बहिच: दीपंकरको प्रदर्शन गर्ने, भाद्रमा पंचदानमा प्रदर्शन गर्ने, आश्विनमा कार्तिक सेवा:, रमा एकादशी देखि पूर्णिमासम्म 'मासोपवास' माय् अपसं, मंसिरमा सनांगुठी, चैत्रमा लोकेश्वरको महास्नान आदि जात्रा पर्व वर्षभरि चलिरहेका छन्। अन्य जात्रा गरी 'दे भ्वय्' मनाउने गर्छन्। यस्तै बाह्र वर्षमा मनाउने 'महासम्यक' जात्रामा आदिनाथ करुणामयलाई हनुमानढोकामा शामेल गर्नु पर्दछ। यस देवताको दैनिक पूजा बाहेक 'चापूजा' (रातमा गरिने पूजा) पीपूजा, दशकर्म पूजा र कोय्ना पूजा गरिन्छन्।[८३] आदिनाथको मूर्तिको पाइलानिर एक चाँदीको बट्टा छ कसैले अनुरोध गरेमा सो बट्टाको बिर्को उघारेर देखाउने गर्छन्। यसलाई हेर्दा पुण्य प्राप्त हुन्छ भन्ने जनश्रुति छ।

### ३.३.४.१ आनन्दादि लोकेश्वरको लोकगीत

सबैलाई निरोगी बनाउने देवता भएकोले श्रद्धालु भक्तजनहरु नेपाल भाषामा रचिएको आनदादि लोकेश्वरको गीत अद्यापि गाउँदै आएका छन्। यो गीत साधारणत: बिहान सबै पाटन काठमाडौं देखि करुणामयको पूजा गर्न भक्तहरु 'कच्छपाल परवत च्वसं वसलया दिल वस' भन्ने गीत गाउँदै जान्छन्। प्रत्येक वर्ष कार्तिक मासमा आदिनायको नाममा व्रतबस्दा प्रार्थना गरी गीत गाउने गर्छन्। यो गीत जयप्रकाश मल्लको पालामा लेखिएको हो।[८४]

श्री आनन्दादि लोकेश्वर शरण:
कच्छपाल पर्वत माथि उहाँ
अमिताभ शीरमा राखि ध्यानले (ध्रु)

### ३.३.४.२ आनन्दादि लोकेश्वरको चर्यागीत

आनन्दादि लोकेश्वरको एउटा प्रचलित चर्या गीत छ । कच्छपालगिरि श्री आनन्दादि लोकेश्वर चर्या गीत राग रामकलि, ताल माथमा लेखिएको छ । चर्या गीत यस प्रकार छ:

श्री कच्छपाल गिरि भुवन निवासित
श्री अमिताभ श्री मौलिधारा ॥
नमामि नमामि श्री आनन्दादि लोकेश्वर
श्रीभुवन व्यापित सुमंगला ॥ ८५ ॥

### ३.३.४.३ आनन्दादि लोकेश्वरको जात्रामा गाली गर्ने परम्परा

आनन्दादि लोकेश्वरको जात्रामा गाली गर्ने पनि चलन छ । जात्रा भनेको रमाइलो गर्ने भएकोले परस्पर जिस्काउने चलन छ । चोभारमा आनन्दादि लोकेश्वरको जात्रा हुने दश दिन अगाडि बलिपूजा गरी बलि पर्याँक्न जाँदा कलिला बच्चाहरु जथाभावी गाली गरेर जाने गर्छन् । यसरी गाली गर्नुका कारण आइन्दा यहाँ कुनै पनि भूत नआओस र तुष्ट गरी दिएको बलि खान भनी संकेत गरेको हो भन्छन् ।[८६]

### ३.३.४.४ आनन्दादि लोकेश्वरका गुठीहरु

आनन्दादि लोकेश्वरको रेखदेख, संरक्षण र सम्बर्द्धनका लागि थरिथरिको गुठीहरुको व्यवस्था गरिएको छ । पहिले राजा वृषदेव र गुणकामदेवले आनन्दादि लोकेश्वरको रथ जात्रा चलाएका थिए भन्ने ऐतिहासिक प्रमाण छ । तर पछि राजपरिवारले चोभारको करुणामयको दर्शन गर्न हुन्न भन्ने धारणा विकसित भयो । श्री ५ पृथ्वीनारायण शाहले काठमाडौं उपत्यकामा आधिपत्य जमाएपछि चोभारमा पूजा पठाई यसको मान्यता दिएको ऐतिहासिक घटना छ ।[८७] यस्तै आदिनाथको नित्यपूजा गर्न वि.सं. १८५७ साल राजा गीर्वाण युद्ध विक्रम शाहको पालादेखि राजगुठी स्थापना भएको छ ।[८८]

चोभारको करुणामयको संरक्षणका लागि र नीत्यपूजा गर्नको लागि एउटा गुठीको व्यवस्था गरेको छ । यो गुठी यहींका पुजारी पांजुहरुद्वारा चलाइरहेका छन् । यस गुठीका गुठीयारहरुबाट नै आनन्दादि लोकेश्वर तिनका मन्दिर र विहारको संरक्षण र नियन्त्रण गर्ने गर्छन् । महिनाको एक पटक आलोपालो चलाउँछन् । विहारको संरक्षण

गर्न १० जना मात्र सर्वसंघ रहेको छ । यिनीहरु दशपारमितालाई पूरा गरी बसेका आज्जुको रुपमा मानिन्छन् । यहाँ हाल ५ जनाको मात्र कवल छ । सर्वसंघ आज्जुलाई 'थपा आज्जु' भन्ने गर्छन् ।

आदिनाथ लोकेश्वरका अरु गुठीहरुमा अक्षता गुठीले लोकेश्वरको पूजा गर्न सम्पूर्ण चामलको व्यवस्था गर्दछ । नैवद्य: गुठीले नैवद्य: चढाउने काम गर्दछ । यस्तै नेकुजुहरुको रंगरोगन गर्ने गुठी छ । यस्तै छत्र उठाउने, मन्दिर बनाउने र जात्रा चलाउने जस्ता काममा प्रकृति अनुसार गुठीहरु छन् जो आयस्ताको कमिले गर्दा निकै मुश्किलले चलाउँदै आएका छन् । आदिनाथ लोकेश्वरको जात्रा सकिएपछि श्री गणेश जलविनायक र पीठमा गई बलिपूजा मांसाहूति, आदि पूजा गरी गुठी चलाउँछन् । यस भोजको व्यवस्था गर्न श्री ५ को सरकारको गुठी संस्थानबाट दस्तुर बमोजिम स्याबजी ३० मुरी, च्यूरा ३ मुरी चामल १ मुरी आदिको प्रबन्ध छ । आजसम्म पनि 'दे भ्वय्' को परम्परा चलिनै रहेको छ । अरु कतिपय गुठीहरु आयस्ताको अभावले बिस्तारै-बिस्तारै म्हासिदै गरेका छन् ।[८९]



# सृष्टिकान्त लोकेश्वर

## ३.४.१ सृष्टिकान्त लोकेश्वर (नाला करुणामय) को परिचय

नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वरहरु मध्ये नाला (बनेपा) स्थित सृष्टिकान्त लोकेश्वर पनि एक हो। यो सृष्टिकान्त लोकेश्वरको वर्ण सेतो छ। आँखा केही साना छन्। मन्दिरमा यसको मोहडा पूर्वाभिमुख गरेको छ। एक हातले अभयवरदान दिइ राखेको मुद्रा छ भने अर्को हातले कमलको फूल समातेको छ। संसारको सृष्टि गर्ने भएकोले सृष्टिकान्त लोकेश्वरको नामले यो प्रख्यात छ। यस लोकेश्वरलाई स्त्री शक्तिको रुपमा मानेका छन्। यस लोकेश्वरले सृष्टिकर्ताको रुप एघार शिर धारण गरी चौध भूवनलाई केन्द्रित गरेका छन्। सृष्टिकान्त लोकेश्वरको मन्दिर नजिकै भगवतीको ऐतिहासिक महत्व भएतापनि प्रमाणिक रुपमा यसको अभिलेख पाउन कठिन छ।[१०]

## ३.४.२ सृष्टिकान्त लोकेश्वरको उत्पत्तिः

सृष्टिकान्त लोकेश्वरको उत्पत्ति र स्थापना विषयमा स्वयम्भू पुराणमा यसरी उल्लेख गरिएको छ।

'नाला' अर्थात नागरी देशका दीर्घरथ महाराजा प्रभृति सबै लोकजनहरुले उपोषध अष्टमी ब्रत बसी उद्धार भएकोले श्री नालाकरुणामयको स्थापना गरे। नाला करुणामयको मेला कार्तिक शुक्ल मुखः अष्टमिका दिन स्नान गरी जात्रा मनाउने गर्दछ।

नाला करुणामय सृष्टिकान्त लोकेश्वरको उत्पत्ति सम्बन्धमा पनि अन्य करुणामयहरुको जस्तै आफ्नै पौराणिक ऐतिहासिक महत्व छ। पहिले पहिले कलियुगमा किरातीहरुले बुँगमतीबाट लोकनाथलाई चोरेर लैजान्छ भनेका थिए। नभन्दै कलियुग आएपछि एकदिन बुँगमतिबाट लोकनाथ (मच्छेन्द्रनाथ) लाई चोरेर लगि हाले। उक्त मूर्तिलाई नालाको बाटो गरी भोट देशमा लान खोजे। तर त्यसलाई लान नसकिएर नाला कै पुण्यतीर्थमा फालेर गए। भक्तजनहरुले यसलाई देखेर बुँगमती मै राख्ने हो कि त्यहीं पुण्यतीर्थ मै राख्ने हो भनी सोध्दा नाला मै बस्ने संकेत गरेकोले नालामा एउटा मन्दिर बनाई विराजमान गराए।

यस्तै सृष्टिकान्त लोकेश्वरको उत्पत्ति सम्बन्धमा लेखिएका लोकगीत अनुसार नाला निवासी च्यामे (पोडे), बुँगका पांजू र नाला देशकै राजा तीनै जनालाई हराएको लोकनाथ नालाको पुण्यतीर्थमा फालिएको सपना देखाए। साँच्चै पुण्यतीर्थमा मूर्ति खोज्न जाँदा मूर्ति फेला पारे पछि एउटा विहार बनाई मूर्ति स्थापना गरी दिए।[९२]

सृष्टिकान्त लोकेश्वरको उत्पत्ति विषयमा अर्को एक पौराणिक लोककथा यस प्रकार छ। सुखावती भुवनमा बास गर्ने करुणामयले सुधर्मादिवीलाई नागरी देशमा पठाई त्यहाँका राजा दीर्घरथलाई धर्मको चेतना जगाई अष्टमीका दिन अमोघपास लोकेश्वरको व्रत बस्ने प्रेरित गराए। सुधर्मादेवी भगवतीको रुपमा परिणत भईन्। यसैको फलस्वरुप सबैको लोक उद्धार गर्न सेतो वर्ण दुइहात रहेको करुणामयको प्रकट भयो। त्यस्तै किरातकालमा मच्छेन्द्रनाथ (लोकनाथ) लाई चोरी नाला देशको पुण्यावती तीर्थमा छोडि दिए। यसरी उक्त मूर्ति फालि राख्यो भन्ने कुरा बन्दिपुरका राजा, नगरीदेशका च्यामे नन्दपाल र पाटनका पाञ्जु तीन जनाले सपना देखे। साँच्चै पुण्यवती तीर्थमा गएर हेर्दा उक्त मच्छेन्द्रनाथको मूर्ति फेला पारी त्यहीं नजिकै एउटा मूर्ति स्थापना गरिदिए। सोही करुणामय सृष्टिकान्त लोकेश्वरको नामले प्रसिद्ध भए।[९३]

## ३.४.३. सृष्टिकान्त लोकेश्वरको जात्रा

पहिले-पहिले सृष्टिकान्त लोकेश्वरको स्थापनाकालमा यसको जात्रा मनाउने परम्परा थियो होला। शायद पछि कुनै परिस्थितिले यो जात्रा मनाउने परम्परा मासेर गएको हुन सक्छ। नाला देश काठमाडौं उपत्यकाबाट टाढा रहेकोले जात्रा चलाउन गाऱ्हो हुन गयो होला। पछि वि.सं. १९९० सालको महाभूकम्प पछि मात्र पुन: नाला करुणामयको जात्रा चलाउन अभिप्रेरित भएको देखिन्छ। नाला करुणामयको संरक्षणका लागि सोही सालदेखि नित्यपूजा गर्न भक्तपुरको प्रशन्नशील महाविहारबाट एक जना बज्राचार्य ल्याएर पुजारी बनाए यसको संरक्षणको लागि व्यवस्था गरिदिए। आयस्ता नभएको कारण मन्दिरको जीर्णोद्वार हुन सकेको छैन। मन्दिर धमिरोले खाएर मकिएपछि वि.सं. १९९३ सालमा पुजारी श्री लालबहादुर बज्राचार्य, साहु बिन्दुलाल श्रेष्ठ र काठमाडौंका श्री आनन्दमुनि बज्राचार्यको संयुक्त प्रयासले मन्दिरको जीर्णोद्वार भयो। आनन्दमुनि बज्राचार्यकै प्रयासले श्री ३ जुद्धशमशेरको बक्स गराई रु. पाचसय चन्दा र नपुग स्थानीय बासिन्दाको जनसहयोगले मन्दिरको पुन: जीर्णोद्वार भयो। पछि वर्षेनी जात्रा चलाउन ने.सं. १०७४ सालतिर एउटा गुठीको पनि व्यवस्था भयो।[९४]

नालाको सृष्टिकान्त लोकेश्वरको महास्नान न्हवं वर्षेनी फागुन शुक्ल प्रतिपदा पूर्णिमाका दिन गर्दै आएको छ । त्यस्तै त्यसको भोलिपल्ट द्वितीयाका दिन पूर्वाङ्ग अधिवासन 'दुसो:' पूजा हुन्छ । तृतीयाका दिन श्रीकरुणामयको दशकर्म विधि गराई प्रतिष्ठा गरिन्छ । जात्राको बेला दीपंकरको मूर्तिलाई मात्र शहर परिक्रमा गराइन्छ । यसको शुरुवात ने.सं. १०८० देखि मात्र भएको हो ।[९५] यस जात्रा हेर्न काठमाडौं उपत्यकाका तीनै शहर कान्तिपुर, ललितपुर, भक्तपुर, पनौती, धुलिखेल आदि ठाउँका भक्तजनहरु आउँछन् । जनमानसमा सांस्कृतिक महत्वको चेतना जागृत हुनु र यातायातको सुविधाले गर्दा पनि अचेल नाला करुणामयको जात्रा हेर्ने जनसहभागीहरु बढ्दै गएका छन् ।

## ३.४.४. सृष्टिकान्त लोकेश्वरको विशेषता

सृष्टिकान्त लोकेश्वर अरु करुणामय लोकेश्वर झैं ऐतिहासिक महत्व भएको आफै विशेषता भएको देवता हो । नेवार बौद्ध संस्कृति अनुसार कुनै कसैको जहान परिवार मृत्यु भएमा नाला करुणामय कहाँ गई १०८ वटा दीप प्रज्वलन गर्नु पर्दछ ।

नालाका मन्दिरको नजिकै ज्ञानतीर्थ छ । उक्त ज्ञानतीर्थ श्राद्ध गर्न आउनेहरुलाई घामपानी वर्षातले समस्या भई रहेको हुँदा एउटा सतल निर्माण गरि दिए । जसले गर्दा भक्तजनहरुलाई सुविधा हुनु पुगेको छ ।

नाला करुणामय पहिलेदेखि नै प्रसिद्ध छ । भक्तजनहरुले सृष्टिकान्त लोकेश्वरको लोकगीत गाउँदै आएका छन् । जुन गीत कहिले लेखिएको हो एकीन साथ भन्न सकिएको छैन । जात्राको बेलामा यो गीत हर्षोल्हासले गाउने गर्छन् ।[९७]

नाला करुणामय सृष्टिकान्त लोकेश्वरको नाउँमा एउटा चर्यागीत रचना भएको छ । जस्तो:

'संसार सृष्टिकर्ता श्री करुणामय श्री करुणामय

आदि देशदिगु लोकपाल सृष्टिकर्ता ।[९८]

अरु लोकेश्वरको झैं यस नाला करुणामयको कुनै गुठीको व्यवस्था छैन । सरकारले पनि यस मन्दिरको संरक्षणका लागि कुनै दृष्टि पुऱ्याएको छैन । गुठी संस्थानले पनि कुनै गुठीको व्यवस्था गरि दिएन । तर अचेल केही भक्तजनहरुबाट जात्रा चलाउन एउटा गुठीको व्यवस्था भएको जानकारी छ । नाला करुणामय रहेको मन्दिर धमिरोले जीर्णसीर्ण भएकोले हाल फ्रान्स सरकारको सहयोगमा मन्दिर जीर्णोद्धार भएको छ ।

### ३.५.१. आर्यावलोकितेश्वर (सेतो मच्छेन्द्रनाथ) को परिचय

नेपालका चार प्रमुख महत्वपूर्ण करुणामय लोकेश्वरहरुमा कान्तिपुरमा आर्यावलोकितेश्वर पनि एक हो । यस लोकेश्वरलाई नेवारहरु 'जनबाहा द्यः' भन्दछन् । नेपाली भाषामा 'सेतो मच्छेन्द्रनाथ' भन्ने गरिएको छ । यसलाई जमलबाट ल्याएकोले 'जनबाहा द्यः' भनिएको हो । आर्यावलोकितेश्वर सेतो मच्छेन्द्रनाथको आफ्नै ऐतिहासिक विशेषता छ । हुनत सेतो मच्छेन्द्रनाथको स्थापना गर्नु अघि नै कनकचैत्य महाविहारको स्थापना भइ सकेको थियो ।[९९] यस विहारलाई प्राचीन समयमा कोलियग्राम जमलग्रन्थि विहार भन्ने गर्दथे । यसैले पनि मच्छेन्द्रनाथलाई जमलेश्वर आर्यावलोकितेश्वर, अमोघपाश लोकेश्वर पनि भन्ने गरेको छ ।[१००] श्वेतवर्ण आयावलोकितेश्वर भएकोले सेतो मच्छेन्द्रनाथ भनिएको हो । यिनको आँखा स-साना छन् । मूर्ति पूर्वाभिमुख छ । दाहिने हातले अभय वरदान दिएको छ भने बाँया हातले कमलको फूल लिएको छ । ध्यान मुद्रामा रही मर्त्यमण्डलमा हेरिरहेको छ । यस मच्छेन्द्रनाथले आफूले निर्माण वा बुद्धत्व प्राप्त गर्न सुमार्ग देखाए तापनि जबसम्म समस्त प्राणीको उद्धार हुँदैन तबसम्म यस जगतमा सम्पूर्ण प्राणीहरु आँखाले देख्न नसकिने कीटपतंगहरुको समेत निर्वाण लाभ भयबाट मुक्त नभएसम्म आफूले बुद्धत्व प्राप्त गर्दिन भनि मर्त्यमण्डलमा हेरी महाकरुणा राखी अधिष्ठान गरेकोले करुणामयले तल हेरिरहेको भनिन्छ । यो लोकेश्वर मूर्तिको शिरमा अभिताभ बुद्धको मूर्ति छ । दायाँबायाँ दुइवटा स-साना हरियो र सेतो मूर्तिहरु राखिएका छन् । जसलाई आर्यतारा र पद्मताराको रुपमा मानिन्छ । दुबै ताराको आमा आर्यावलोकितेश्वर मच्छेन्द्रनाथलाई मानिन्छ । यस करुणामय लोकेश्वर जगतसत्व प्राणीको उद्धार गर्ने वाचा गरी सृष्टि भएका थिए । तर उनले मनले सोचे अनुसार जगतसत्व प्राणीको उद्धार गर्न नसक्दा करुणाले दुई थोपा आँशु झार्दा दुई तारा उत्पन्न भएको हो भन्ने गरेको छ । यी दुई ताराहरु करुणामयले पूरा गर्न नसक्ने उद्देश्यलाई पूरा गर्न सृष्टि भएका हुन भनिन्छ । ताराको प्रतीक भएकोले तिब्बती लामाहरु आर्यावलोकितेश्वरलाई 'जामन कार्पोभ' सेतो ताराको रुपमा मान्दछन् । उनीहरु लोकेश्वरलाई निकै श्रद्धाले मान्दछन् ।[१०१]

### ३.५.२.आर्यावलोकितेश्वर (सेतो मच्छेन्द्रनाथ) को उत्पतिः

कनकचैत्य महाविहार (जनबहाल) को स्थापना सम्बन्धमा ने.सं. २५६ सालतिर लिच्छवीकालीन राजा नरेन्द्रदेवको पालामा लेखिएको हस्तलिखित अभिलेख उल्लेख छ। उक्त ग्रन्थ राष्ट्रिय अभिलेखालयमा अझै सुरक्षित छ। यसबाट यो विहार निकै पुरानो हो भनी सिद्ध हुन्छ।[१०२]

राजा यक्ष मल्लको पालामा लेखिएको एउटा हस्तलिखित ग्रन्थमा यस विहारको बारेमा कोलियग्रामको जमग्रन्थि विहार भनी उल्लेख भएको छ । कोलिग्राम भनी लिच्छविकालका ठाउँ-ठाउँको अभिलेख उल्लेख छन्। यसबेला शाक्यहरुको विकास भई सकेको हुनु पर्दछ । पछि शाक्य र कोलियहरु नेपाल प्रवेश भई कोलिग्राम हुन गयो भनिन्छ । कोलियहरु शाक्यमुनि बुद्धका मामा खलक भन्ने पनि गरिन्छ । मामाको सम्बन्ध भएकोले नेपालमा बुद्ध धर्मबाट प्रभावित भई धेरै शाक्यहरुले विहारहरु स्थापना गरे । यसै सिलसिलामा यिनीहरुले कनकमुनि बुद्धको संझनामा कनकचैत्य बनाएको पुष्टि हुन्छ। कोलिग्रामको अपभ्रंशबाट नै केलटोल हुन गएको हो। यो टोलमा मानदेव कालीन लिच्छविकालीन ढुंगेधारा स्थापना भएको शिलालेख भेटाएको छ।[१०३]

सेतो मच्छेन्द्रनाथको उत्पत्ति सम्बन्धमा एउटा पौराणिक कथा छ :

"सर्वाथसिद्ध भगवान बुद्ध नेपालको पूण्यभूमि कान्तिपुर नगरमा आउनु भई आर्यावलोकितेश्वर मच्छेन्द्रनाथको उत्पत्ति विषयमा मैत्री बोधिसत्वलाई भन्नु भएको थियो ।

पहिले-पहिले कान्तिपुर शहर स्थापना नभएको बेलामा जमपुर भन्ने एउटा जमदेश थियो। राजा यक्षमल्लकी रानी भुवनेश्वरीबाट 'रत्नमल्ल' नामको एउटा छोरा जन्म्यो। उक्त राजाको पुण्यानुलाभले सुखावती भुवनवास गर्ने श्री करुणामयले सर्वसत्व प्राणीको उद्धार गर्ने हेतु एक विहारको स्थापना गरे। यो विहार वागमती र कागमती मिल्ने कालमोचन तीर्थको किनारा जसलाई आजकल 'व्हंग:' भन्ने गरिन्छ। यस व्हंग: बाट 'वंग:' भन्ने गरेको हो। कालमोचनको तीर्थमा स्नान गरी यस करुणामयको दर्शन गरेमा कालबाट मुक्त भई आयुपूर्ण भई सधैंको लागि निरोगी हुनेछ भन्ने भगवान बुद्धले आज्ञा भएको थियो। यस पुण्यभूमि अमरावतीमा देवलोकबाट तल तीर्थमा आएको ठाउँ भएकोले इन्द्रचोक भन्ने गरेको छ। यस्तै आकाशबाट झरेको आकाश भैरव पनि तल आई इन्द्रचोक (वंग) मा सिद्ध भएर बस्न थाले।[१०४]

सेतो मच्छेन्द्रनाथको उत्पत्ति सम्बन्धमा अर्को एउटा पौराणिक कथा पनि छ। जस्तै:

"यमपुरका राजा यमराजले यस पृथ्वीमण्डलमा बसेका प्राणीहरुको मृत्यु हुने अवस्थामा धर्ममा आस्था राख्नेहरुलाई स्वर्गमा पठाउने र पाप गर्नेलाई नरकमा ल्याई सास्ति गर्ने आदेश दिने गर्दथे। यसरी आज्ञा भएपछि यमराज र चित्रगुप्त दुवै भेष बदलेर स्वयम्भू दर्शन गर्न पृथ्वीमा अवतरित भए। कर्म अनुसारको फल दिने यी दुई जना पृथ्वीमा आएको थाहा पाएर यहाँका राजा यक्षमल्लले भेट्ने इच्छा गरे। पछि यी दुवैलाई राजदरबारमा बोलाएर निकै सम्मान गरी राखे। राजाको यस्तो अगाध सेवा सुषुश्राले यी दुवै भेषधारीहरु प्रशन्न भई राजालाई कुनै बरदान माग्न आग्रह गरे। राजाले पनि यसै मौकामा आफू सदा निरोगी भई सदा मृत्युबाट बच्न गई सदा तन्नेरी हुने बरदान मागे। तर भेषधारी यमराजले यस्ता बरदान दिन सक्ने वहा आफूमा नभएको कुरा भने। राजाले यस्तो वरदान नदिएमा आफ्नो गुरु बज्रपाणिबाट दिगबन्धनको तारण राखी त्यहाँबाट अन्यत्र नपठाउने भनी भने। यो देखी यमराजले यस्तो बरदान सुखावती भुवनमा वास बस्ने आर्यावलोकितेश्वर करुणामयले मात्र दिन सक्ने कुरा अवगत गराए। साथै यमराजले राजाको करकाप जिद्दीलाई टाल्न नसकी सुखावती भुवन वास गर्ने श्री आर्यावलोकितेश्वर यक्षमल्लले सधैं स्नान गर्ने पोखरीबाट अभिताभ बुद्धको शिरमा राखी प्रकट भई सबैलाई दर्शन दिए। यसबेला भेषधारी यमराजले राजा यक्षमल्लको अनुरोधलाई (बरदान) यसरी सुनाए "भो जमलेश्वर जलवाहनबाट राजा यक्षमल्लको अनुरोधलाई स्वीकार्नु पऱ्यो।" यो कुरा सुनी आर्यावलोकितेश्वरले यसरी आज्ञा भयो।

"म आएको पोखरीको पानी जहाँ जान्छ त्यो नै कालमोचन तीर्थको रुपमा सिद्ध हुनेछ। यस तीर्थमा जसले स्नान गर्छ उसलाई कालबाट बचाउँछ। यसै ठाउँमा बागमती र कालमतीको दोभानमा एउटा विहार पूर्वाभिमुखि गरी बनाउन आज्ञा गर्दछु। उक्त स्थानको पानीले स्नान गरी मेरो दर्शन गरेमा निरोगी हुनेछ भनि आर्यावलोकितेश्वर विलीन हुनु भयो। साथै यमराज त्यहाँबाट मुक्त भए।"

यहीं आसपास यमराजको सम्झनामा यमलेश्वर भन्ने एउटा लिङ्ग पनि गाडि दिए। राजा यक्षमल्लले आफ्नो छोरा रत्नमल्लसंग मिली करुणामयको एउटा विहार स्थापना गरे। त्यसैले आजसम्म आयु साधना गरी रोगबाट मुक्त हुन र सुखावती भुवन वास कामना गर्न यस करुणामयको स्मरण गर्दै आएको छ।[१०५]

सेतो मच्छेन्द्रनाथको उत्पत्ति विषयमा भद्रकाली लुँमधि अजिमासंग पनि सम्बन्ध रहेको छ। यहाँ काठमाडौंको अमोघपाश करुणामयको प्रतापले यहाँका मान्छेहरु सुखी हुँदै आएको देखेर पाटनका राजा सिद्धिनरसिंह मल्लको मन स्थिर रहन सकेन। सिद्धिनरसिंहले नरसिंह पठाई कान्तिपुरमा आपत विपत गराई दिए। यो देखी कान्तिपुरका राजाले सबल वहालका शाश्वत वज्र बज्राचार्य (मंत्रसिद्धि बज्राचार्य) संग सल्लाह साहुति लिए। शाश्वत वज्रले भारतको आसाममा रहेको कामारु कामाक्षमा श्री भद्रकाली नामको एक देवी छ त्यसलाई नेपालमा ल्याएमा त्यसले ती नरसिंहलाई धपाउन सकिने छ भने। राजाको वचन लिई शाश्वत वज्र बज्राचार्य भारतको कामारु कामाक्षमा जानु भई जाँडको कट भएको मद्यपात्रमा भद्रकाली परमेश्वरीलाई साधना गरी ढकी ( कलचा:) मा राखी नेपाल ल्याए। शाश्वत वज्रले भद्रकालीलाई नेपालमा ल्याएको खबर राजा कहाँ पुऱ्याउन भद्रकाली साधना गरी ल्याएको मद्यपात्र भएको टुंडिखेलको एउटा रुखमा झुण्ड्याएर राजदरबार तर्फ गए। त्यसैबेला एउटा ज्यापु खर्पन बोकेर खेतमा जानलाई आउँदा उनले भद्रकालीलाई रोइरहेकी एउटी बालिकाको रुपमा देखे। ती केटीलाई सुनको रोटी दिउँला भनी फकाइ फुलाई आफुसंगै तुपेक (तुप्या) तिर लगे। ज्यापु खेतमा काम गरिरहेको बेला उक्त बची रोएकोले रोटी खान दिए। त्यसैबेला उक्त बचीले आफूलाई शाश्वत वज्रले कामारु कामाक्षबाट ल्याएको कुरा भनिन्। त्यसैबेला उक्त बची अन्तरध्यान भइन। उनले ख्वाएको रोटी पनि सुनमा परिवर्तन हुन गयो। त्यहीबेला शाश्वत वज्र बज्राचार्य आफूले ल्याएको ढकी (कल:चा) नपाएर खोज्दै आउन्दा तुपेक (तुप्या) तिर लगेको भनी दिव्य दृष्टिले थाहा पाई तुपेकतिर लागे। संजोगले उक्त बालिकालाई (बची) भेटी सुनको रोटी दिन्छु, कहिं नभएको जात्रा देखाउन्छु भनी फकाई काठमाडौंको टुंडिखेलको एक कुनामा मन्दिर बनाई विराजमान गराई दिए। लुँमधि भनी चामलको रोटी (चताँमरी) लाई पहेंलो बेसार लगाई चढाउने गर्छ। त्यस्तै कहिं नभएको जात्रा भनी घोडेजात्रा देखाउने गरायो। यसले भद्रकालीलाई 'लुँमधी द्य:' पनि भन्ने गर्दछ। वर्षेनी घोडा दौडाई घोडे जात्रा गराउदै आएको छ। भनिन्छ भद्रकालीको उत्पत्ति पनि करुणामयको शक्तिबाट नै भएको हो।[१०६]

आर्यावलोकितेश्वर सेतो मच्छेन्द्रनाथ किरातकालमा नै स्थापना रहेको बुझिन्छ। रानीपोखरीको उत्तरतिर जमल बहाल भन्ने ठाउँमा एउटा खेतबारी थियो। त्यहाँ एउटा ज्यापु खेत खनिरहँदा उनले एउटा मूर्ति फेला पारे। उक्त मूर्तिले म त्यहाँ बस्दिन भनेकोले राजाको आज्ञा लिइ कनकचैत्य महाविहार मै प्रतिस्थापन गरिदियो। यसरी पछि मात्र यसलाई जनबहालमा ल्याएको हो।[१०७]

### ३.५.३. आर्यावलोकितेश्वरको जात्रा

पाटनमा रातो मच्छेन्द्रनाथको रथ बनाई जात्रा गरे झैं सेतो मच्छेन्द्रनाथको पनि प्रत्येक वर्ष काठमाडौंमा एउटा ठूलो लामो रथ बनाई जात्रा गर्ने गरिन्छ । यो जात्रामा राजाको सवारी नभए तापनि राजाको खड्ग र गुरुजुका पल्टन ल्याउनु पर्दछ । यो रथ जात्रा वर्षेनी विशेष एक पर्वकै रुपमा भव्य रुपमा मनाउने गर्छन् ।

### ३.५.३.१. आर्यावलोकितेश्वरको महास्नान (न्हवं)

पौष शुक्ल पक्ष अष्टमीका दिन आर्यावलोकितेश्वर मच्छेन्द्रनाथको महास्नानका लागि सप्तमीका दिन बिहान सबेरै चार बजेतिर द्योगुरु र बेताजु गुरुजु (सबल बहालका शाश्वत वज्रका संतानहरु)१०८ र जनबहालका थकाली गुरुजुहरु र सर्वसंघ उपासक उपासिकाहरु ठूलठूला गोजा (एक प्रकारको भात वा सातु पानीमा मिसाई बनाएको) र पूजाको सामाग्री लिई नवघट राखी पूजाको लागि जल लिन भचाखुसी अर्थात् शान्ततीर्थ जान्छन् । त्यसपछि नवघटमा शुद्र जल राखी राती बाल्ह बजे स्तोत्र पाठ गरी जनबहाल मै फर्कन्छन् । बहालमा पुगेपछि कलशभित्र करुणामयको जीवन्यास गरी साधना गरिन्छ । करुणामयलाई मन्दिरबाट बाहिर निकाली दाहिने एक कुनामा राखिन्छ । भोलिपल्ट अष्टमीका दिन महास्नान गर्न नेमकुल जातिले करुणामयलाई लिन आउन्छन् । अपरान्ह समयमा करुणामयलाई मन्दिरको अगाडि दाहिनेतिर मण्डपमा राखिन्छ । महास्नानको दर्शन गराउनका लागि कुमारीलाई पनि ल्याउने गर्दछ । भनिन्छ यो महास्नान पर्व अवलोकन गर्न आकाश मार्गबाट तेंतिसकोटी देवताहरु जस्तै गन्धर्व, किन्नर, यक्षगणहरु हेर्न आउन्छन् । यस्तै महास्नान हुँदा पँय्ता र अरु बाजाहरु बजाउने गर्छन् । महास्नान गराउनुभन्दा अघि करुणामयको जीउमा लगाइरखेको सम्पूर्ण गरगहना कपडा निकाल्छन् । एकदिन अगाडि भचाखुसीबाट ल्याएको दाँयाबाँया राखिएको तामाका घडाका पवित्र जलले गुरुज्युद्वारा, मंत्रोचरण गरी दुई जना विहारका थकालीहरुबाट करुणामयलाई महास्नान गराइन्छ । केही समयपछि पुन: तातोपानीले स्नान गराउँछन् । महास्नानको बेला हेर्न आउंने सबै भक्तजनहरुलाई महास्नानको पवित्र जलले सिञ्चन गर्दछन् । महास्नानपछि लोकेश्वरको मूर्तिमा कपडा बढाई मन्दिर घुमाई मन्दिरभित्र लगिन्छ । लोकेश्वरको मूर्ति मन्दिरभित्र यथास्थानमा राखिसकेपछि सर्वसंघ जम्मा भई 'को काय्गु' भनी शखर, च्यूरा चार कवलका गुठीयार पुजारीहरुमा भाग लगाउँछन् । उक्त शखर र च्यूरा आ-आफ्ना दाजुभाई (फुकी) हरु बीच प्रसाद स्वरुप ग्रहण गर्दछन् । यो शखर च्यूरा बाँड्ने परम्परा कसकसको पालो बस्ने भन्ने कुराको

निश्चित हुन्छ । 'पोहेला पा:' भनी त्यो दिन पालो फेर्ने काम हुन्छ । सर्वसंघमा पालोको आदान प्रदान यसरी हुने गर्दछ । महास्नानको कार्यपछि त्यसको भोलिपल्ट नवमीको दिनदेखि लोकेश्वरको मूर्तिलाई मच्छिन्द्रबहालको उत्तरतिर घाम आउने पारिलो ठाउँमा रहेको ढुंगाको पद्मासनमा राखी घाम ताप्ने गर्दछन् । मूर्तिमा रंगारोहण गर्ने काममा गुठीका चित्रकारले मद्दत गर्दछन् । पूर्णिमाको एकदिन अगाडि 'लँपुली छाय्गु' भनी करुणामय र ताराहरुको मूर्तिमा रंगरोगन गर्ने काम समाप्त गरिन्छ । चित्रकारको सल्लाह लिइ पुजारीले रंगले सजाउने गर्छ । पूर्णिमाको दिन 'द्य:गुरुजु' बेताजु, पाँच जना थकाली र तीन जना थकालीका श्रीमतीहरु (थकालीनकीं) र जमोमी (किसान ज्यापु) बसी होमादि गरी दशकर्म विधि अनुसार रात्री पूजा गरिन्छ । यसरी दशकर्म विधि अनुसार संस्कार गर्दा करुणामयलाई पुरुष र नारीलाई गरिने प्रतिष्ठा संस्कार गरिन्छ । जस्तै उपनयन र बेलबिवाह आदि । मूर्तिमा दृष्टिदान गरी बाह्य पूजाको समाप्तिपछि लोकेश्वरको मूर्तिलाई मन्दिरभित्र लगी स्थापना गरिन्छ । आगंमको 'दिगी घरमा' बज्राचार्यहरुबाट वज्रयान विधि अनुसार अभ्यंत्तर पूजा गरिन्छ । गुह्यपूजा गर्दा अवलोकितेश्वरलाई हेरुकको प्रतीक भनिन्छ । वाह्य रुपमा अवलोकितेश्वर करुणाको प्रतीक हो । यसैले करुणामयको दशकर्म पूजा र अन्य पूजाको प्रसाद सम्पूर्ण गुथियारका परिवारमा 'सिसापालु ख्वाउने' भनी चाकु, नून, शखर, अदुवा, ल्वांग मिसिएको प्रसाद वितरण गर्दछन् । लोकेश्वरलाई प्रतिष्ठा पूजाको समापन पछि 'थाय् भू' मा भब्य भोज भाग लगाइन्छ ।[१०९]

## ३.५.३.२. आर्यावलोकितेश्वरको रथ जात्रा

काठमाडौं उपत्यकामा हुने अनेक रमाइला जात्राहरुमध्ये सेतो मच्छेन्द्रनाथको रथ तान्ने जात्रा पनि एक हो । रातो मच्छेन्द्रनाथको रथ बनाए झैं सेतो मच्छेन्द्रनाथको पनि ३२ हातको ठूलो रथ बनाइन्छ । चैत्र शुक्ल अष्टमी, नवमी र दशमी तीन दिन स्वर्ग, मर्त्य र पाताल तीनै लोक रहेको देवदेवताहरु देखाउन रथ जात्रा गरिन्छ । यदि निश्चित ठाउँमा रथ ल्याउन नसकी कहिं रोकेमा (ल्या: न्यायकेंगु काम) तीन दिन भन्दा बढी पनि लाग्न सकिनेछ ।

मच्छेन्द्रनाथको रथ बनाउने जिम्मा गुठी संस्थानलाई दिएको छ । सेतो मच्छेन्द्रनाथको रथ घण्टाघर, बाल्मिकी छात्राबास जमलको अगाडि बनाउने गर्छ । यो रथ शिखंर शैलीमा बनाइन्छ । रथमा चारतिर चारवटा पांग्रा हुन्छन् । एउटा लामो काठको घ:मा हुन्छ । यी चार पांग्रालाई भैरवको प्रतीक मान्दछन् । पांग्रामा तीन वटा

नेत्रहरु लेखिएको हुन्छ। घ:मालाई नागको प्रतीक मानिन्छ भने घ:माको अगाडि एउटा ठूलो तामाको आधा कदको मूर्ति राखिएको हुन्छ। जसलाई भैरव वा हयग्रीव भन्दछन्। रथका दश तल्लालाई इन्द्र, वरुण, कुवेर अग्नि, नैऋत्य, वायुब्य, ब्रह्म र महादेव र नारायणको प्रतीक मानिन्छ। रथको मूल भाग पांग्रा देखि माथि चारकुना परेको बार्दली जस्तो बस्ने ठाउँ हुन्छ। यसको बाहिर सुनको जलप लगाएको आँखी झ्यालको बुट्टा भएको पाताले मोरेको हुन्छ। यो बार्दलीको बीचमा एउटा सानो कोठा हुन्छ। त्यही कोठामा श्री करुणामयलाई विराजमान गराइन्छ। उक्त कोठाको माझमा सहस्रभुज लोकेश्वरको पीत्तलको तोरण छ। यस्तै दाँयाबाँया ६ वटा हात भएका ताराका मूर्तिहरु छन्। अर्को तोरणमा गरुड, नाग र मकर आदिले सजाएको छ। यस्तै मूल ढोका माथि पंचबुद्धको मूर्ति कुडिएको छ। रथको माथि देखि तलसम्म पीत्तलको लामो ध्वजा पताका झुण्ड्याएको हुन्छ। रथमा चन्द्र र सूर्यको आकृति भएको मुकुण्डो पनि हुन्छ।[१०]

चैत्र शुक्ल अष्टमीका दिन दिउँसो जनबहालको मूल आगमनबाट आर्यावलोकितेश्वरको मूर्तिलाई निकाली बागेमुढा, असन, कमलाछी हुँदै बाजागाजा साथ खतमा राखी आठ जना पूजारीहरुले बोकेर जमलमा ल्याउँछन्। जमलमा बनाइ राखेको रथमा मूर्तिलाई विराजमान गराउँछ। मच्छेन्द्रनाथका सर्वसंघका दुई जना थकालीहरु सेतो भोटो र जामा पहिरी, कोट जस्तो 'काँच' भन्ने कालो लुगा लगाई, शिरमा रातो 'उद्यां' तपुली भन्ने मुकुट लगाई श्रीकरुणामयको दायाँबाँया उभिइ सेतो चमरले हम्किरहन्छन्। रथको सुरक्षार्थ राजदरबारबाट राजाको प्रतीकको रुपमा खडग ल्याई एकजना राजपुरुष खटमा आएर बस्दछन्। गुरुजुको पल्टन पनि शामेल हुनु पर्दछ। यो पल्टनका जवानहरुले श्री ५ पृथ्वीनारायण शाहले नेपाल विजय गर्दाको बखतको जस्तै नीलो रंगको जंगी पोशाक लगाएको हुन्छ। केहीले मुरली सहित ढोलक बजाउछन् भने अन्य जवानले भरुवा बन्दूक लिएको हुन्छ। यो पल्टन रथको अगाडि लाग्दछ। नायखिं बाजा र धिमे बाजा यो रथ जात्राको लागि नभई नहुने बाजा हो। साथै अरु बाजा पनि हुन्छन्।

रथ यात्राको पहिलो दिन जमलदेखि रथ तानेर असनमा पुऱ्याइन्छ। दोस्रो दिन असनबाट हनुमान ढोकाको कालभैरबको अगाडि पुऱ्याइन्छ र तेस्रो दिन हनुमान ढोकाबाट रथ तानी करुणामयको आमा भनिने लगन टोलको डबलीको बीचमा रहेको रुखलाई रथले तीनचोटी परिक्रमा गराइन्छ। प्रत्येक दिन रथ गन्तव्य स्थानमा पुगेपछि हर्ष बढाइँको रुपमा गुरुजुको पल्टनले दुइपल्ट बन्दूक पड्काउछन्। यसलाई 'या: न्यागु' अर्थात् यात्रा सफल भएको भन्दछन्।

कहिले काहिं रथ गाडिएर, रुखमा अल्झिएर वा छानामा ठोकिएर रथ पुऱ्याउनु पर्ने ठाउँमा नपुग्न पनि सक्दछ ।

विशेषत श्रीकरुणामयको रथ असन र लगनमा पुगेको रातमा स्थानीय भक्तजनहरु आई १०८ देवा बत्ती बाल्दछन् । कोही व्रत बसी महाद्वीप बाल्दछन् । भोलिपल्ट बिहान रथमा विराजमान भएका श्रीकरुणामयको दर्शन गर्न आउने भक्तजनहरुको भीड लाग्दछ । कोहीले सप्तविधानुत्तर पूजा पनि गर्दछन् । यस्तै असनमा रथ राख्दा करुणामय अगाडि मृगस्थलीका कनफट्टा जोगीले विशेष चक्रपूजा चलाउँछन् । घःमा अगाडि एउटा कुखुराको बलि दिइन्छ । यो चलन गोरखनाथका गुरु मच्छिन्द्रनाथ भएकाले नाथ सम्प्रदायहरुले यसलाई पनि मच्छिन्द्रनाथको रुपमा मान्ने गरेको छ ।[१११]

असनमा रथ तान्न सकिएपछि भोलिपल्ट जनबहाल, इन्द्रचोक हुँदै हनुमान ढोकाको कालभैरव अगाडि तानेर लैजान्छ । मच्छेन्द्रनाथको आफ्नो निवासस्थान मच्छेन्द्रबहालमा (जनबहाल) पुग्दा चताँमरी योमरी (चामलको पीठो बनाएको एक प्रकारको रोटी) खसाली 'घली लुइगु' भनी रमाइलो गर्छन् । हनुमान ढोका पुगेपछि यस क्षेत्रका मान्छेहरुले पनि १०८ द्वीप प्रज्वलन गर्न आउन्छन् । अरु पनि पूजा गर्न आउछन् ।

हनुमान ढोकामा एक दिन राखि सकेपछि भोलिपल्ट लगनमा तानेर लैजान्छ । लगनमा पुगेपछि 'मां सेवा' भनि तीनपल्ट यहाँ स्थित मन्दिर घुमाउँछ । यस मन्दिरलाई करुणामय मच्छेन्द्रनाथको आमाको रुपमा मानिन्छ । यहाँ राख्न सकिएपछि भोलिपल्ट देउटालाई खटमा राखी भव्य जात्रा गरी जनबहालमा आफ्नै मन्दिरमा फर्काइन्छ ।

सेतो मच्छेन्द्रनाथको रथ तान्ने परम्परा कतिको पुरानो छ भन्ने सम्बन्धमा धेरै अभिलेखहरु पाइन्छन् । सत्रौं शताब्दीको उत्तरार्धमा कान्तिपुरका राजा लक्ष्मीनरसिंहको पालामा लगनतिर रथ तानेर लैजान्दा मरु गणेशस्थानतिर पुग्दा त्यहाँस्थित कल्पवृक्ष एउटा मानिसको भेष गरी हेर्न आएको रहेछ । रथमा बस्ने एउटा पुजारीले त्यो मानिसलाई कल्पवृक्ष हो भनी थाहा पाए । त्यसबेला त्यो पुजारीले उक्त मान्छेलाई तन्त्रमन्त्रले हात समाई जबसम्म एउटै रुखको (कल्पवृक्ष) काठबाट मन्दिर बनाउँदैन तबसम्म नछाड्ने भने । कल्पवृक्षले एउटा रुख पठाइ दिने बाचा गरेपछि उनलाई छाडी दिए । चार दिनपछि कल्पवृक्षले एउटा रुख पठाइ दिए । राजाको आज्ञा लिएपछि पुजारीले उक्त एक रुखबाट त्यहीं मरुमा एउटा वृहद् सत्तलपाटी बनाए । यसलाई मरुसत्तल वा 'सिंहसतः' पनि भनिन्छ । यो एउटै रुखको काठले बनाएकोले काष्ठमण्डप वा काठमाडौं पनि भनिन्छ ।[११२]

तीन दिनसम्म रथ तानी जात्रा धुमधामले मनाउने गर्दछ । तर कहिले काहिं रथ तान्ने डोरी लुकाइएमा, रथ बिग्री कहिं अड्किएमा, आगो लागेमा रथ तान्न नसक्ने हुन्छ । तैपनि पूर्णिमा अघि नै देउटालाई फर्काएर मन्दिरमा विराजमान गराउनै पर्दछ । रथ तान्ने बेलामा रथ बिग्रेमा रथको माथिल्लो टुप्पामा राखिने बाय्मो (गजूर) खसेमा, आगो लागेमा मुलुकमा ठूलठूला मान्छेहरुलाई र जनताहरूलाई विघ्न बाधा आउन सक्छ भन्ने जनश्रुति छ । वि.सं. २०४६ सालको जनक्रान्तिका कारण रानीपोखरीमा गोली चल्दा रथ तान्न सकिएन । परिणाम स्वरुप देशममा जनक्रान्ति आई बहुदलीय व्यवस्थाको स्थापना हुन गयो । वि.सं. २०५४ सालमा मच्छेन्द्रनाथको रथमा आगो लाग्दा रथबाट मूर्ति समेत निकाल्नु पर्‍यो । यस्तो ऐतिहासिक घटनाहरुलाई यहाँ मन्दिरस्थित 'शान्तिस्वस्ति' पुस्तकमा सधैं अभिलेख लेख्ने गरेको छ । यस्तो दुर्भिक्ष हुन्छ भनेर कुनै नरमाइलो घटना घट्ने बेलामा राजदरबारबाट 'शान्तिस्वस्ति' गर्न पूजा सामाग्रीहरु पठाउने गर्दछ ।

सेतो मच्छेन्द्रनाथको रथ तान्ने परम्परा आजसम्म चल्दै आएको छ । जस्तोसुकै आपत विपतमा पनि जात्रा नियमित रुपमा चल्ने परम्परा रोकिएको छैन । वि.सं. १९७४ सालमा मच्छेन्द्रबहालको मन्दिरभित्र ठूलो आगलागी भई दिगी छेँ (घर) र अन्य वरिपरिका घर ध्वस्त हुन गए । त्यसबेला परापूर्वकालदेखि ऐतिहासिक घटनालाई लेख्दै आएको 'शान्तिस्वस्ति पुस्तिका' पनि जलेर ध्वस्त भयो । यस्तै वि.सं. १९९० को महाभुकम्पले सम्पूर्ण बाटाघाटा बिग्रेकोले रथ तान्न नसक्दा खटमै राखेर भएपनि शहर परिक्रमा गरी जात्रा गरेको इतिहास छ ।[११३]

## ३.५.४. आर्यालोकितेश्वरको विशेषता

आर्यावलोकितेश्वर मच्छेंन्द्रनाथलाई अमोघपाश लोकेश्वर पनि भन्ने गरेको छ । अष्टमीको दिनमा श्री अमोघपाश लोकेश्वरको व्रत बस्ने परम्परा आज पनि उति नै श्रद्धा राखेर मनाउँदै आएको छ । यस अष्टमीको उपोषध व्रत बसी असंख्य फल पाउन्छ भन्ने जनश्रुति छ । यो व्रत सम्बन्धमा वाशिष्ठावदान र बडिकको कथा भन्ने परम्परा पनि छ ।

सेतो मच्छेन्द्रनाथको धार्मिक मान्यता अनुरुप यहाँस्थित तीनवटा ठूलठूला सुनको दियो बल्दा बिरामीको अवस्था र उनको भाग्यको निर्धारण हुन्छ भन्ने लोकोक्ति छ । जस्तो यहाँको बत्ती बाल्दा कुनै बाधा नभई बिस्तारै बल्दै गयो भने बिरामी मान्छे निको हुने बाँच्ने सम्भावना हुन्छ । यदि कुनै विघ्नबाधा आइ बत्ती बाल्दा पूरा बल्न नसकी

बीचैमा निभिएमा बिरामीको अवस्था नाजुक छ वा बाँच्न नसक्ने संकेत गर्दछ । यसैले यस करुणामय मच्छेन्द्रनाथलाई जन्मराजको रुपमा मानिएको छ । यदि कुनै कसैले श्राद्ध पिण्डपूजा गर्न नभ्याएमा वा नसकेमा मर्नेहरुको नाममा 'निसला:' दिने वा अरु पूजा सामाग्रीहरु यहाँ चढाउने गर्छ । जन्मदिनको अवसर पारी श्रद्धालु भक्तजनहरु बत्ती बाल्न आउने गर्छन् ।

### ३.५.४.१. आर्यावलोकितेश्वरको दैनिक कार्य

आर्यावलोकितेश्वरको मूर्तिलाई संरक्षणको लागि विशेष व्यवस्था गर्न मछिन्द्रबहालको बज्राचार्य र शाक्य परिवारबीच आलोपालो गरी जिम्मा लिन्छन् । महास्नानपछि मच्छेन्द्रनाथको प्रतिष्ठा गर्ने सवलबहालको शाश्वत वज्र बज्राचार्यको सन्तानमध्ये एकजना मूलाचार्य हुन्छ र एकजना उपाध्याय हुन्छन् । श्रीकरुणामयको पूजा र जात्रा आदि काममा सहयोग गर्न एउटा 'जमोमि' भन्ने किसान ज्यापु हुन्छ । यस जमोमि किसानलाई चुडाकर्म गरी अरु किसानलाई भन्दा बेग्लै तहमा राखिएको हुन्छ । यसरी सबै मिली मच्छेन्द्रनाथको दैनिक दिनचर्याहरुको विधि व्यवहार चलाउँदै आएका छन् ।

मन्दिरमा पालो बस्ने क्रममा आजकाल बज्राचार्य र शाक्य दुई परिवारबीच क,ख,ग,घ गरी चार कवलमा विभाजित गरिएका छन् । चार कवलको समूहमा जम्मा २५ घर भएकोमा एक घरले पालो छोडेको हुँदा अहिले २४ घर मात्र बाँकी रहको छ । पालो लिंदा र गुठी चलाउँदा यी चार कवलमा आफ्ना दाजुभाईमा कसैको २५ प्रतिशतले पालो लिन्छ भने कोही दाजुभाईमा ७५ प्रतिशत पालो आउन्छ । यसैले कसैको दाजुभाईहरु धेरै जहान भएमा अलग्ग बसेमा वर्षेनी पालो आउन सक्छ । पालो बस्दा महिनाभरी बस्तछ । पालो बस्दा अर्को 'भरी:' भनि पालो लिने बस्ने गर्छ । पालो लिन्दा गुठी संस्थानका प्रतिनिधि र थकालीहरु बस्ने गर्छन् । देउटाका सम्पूर्ण गरगहना एक-एक गरी पालो बस्नेलाई बुझाउन्छ । केही हिनामिना भएमा क्षतिपूर्ति पनि दिनु पर्दछ । मच्छेन्द्रनाथको धेरै गरगहनाहरु भक्तजनले राखेका छन् । पालो लिदा 'तिसा बिचा:' भनी गरगहना राख्ने दाताहरुको नाम लिने गर्छन् ।[११४]

आजकाल मान्छेमा धर्मकर्मप्रति तृष्णा हराउँदै गएकोले पालो बस्न गुठियारहरुले झनझन छाड्दै गएका छन् । यस मच्छेन्द्रनाथमा कोही गुठीयारहरु ठूलठूला पदमा जानु, बसाइँ सर्नु कामले गर्दा पालो बस्ने गाह्रो भएका छन् । एक त विहारमा पालो बस्दा

आम्दानी धेरै नहुनु र ज्यू ज्यानको सुरक्षा नहुनु, बेजातिय जथाभावी केटीमा बिहे गर्दै जाँदा विहारमा पालो बस्न मुश्किल हुँदै आएको छ ।

### ३.५.४.२. आर्यावलोकितेश्वरको गुठी व्यवस्था

सेतो मच्छेन्द्रनाथको रथ निर्माण गर्ने जिम्मा गुठी संस्थानले लिएको छ । यहाँ रातो मच्छेन्द्रनाथको जस्तो धेरै गुठीहरु छैनन् । तैपनि चार दिशाका ज्यापुहरु रथ निर्माण गर्न सहयोग पुऱ्याउन आउँछन् । मच्छेन्द्रनाथको कामको लागि हरेक किसिमले सरसामान बोकी मद्दत पुऱ्याउँछन् । आजकाल भने यसरी मद्दत गर्ने ज्यापुहरुको अभाव हुँदै आएको छ । आयस्ता नहुनु, भूमिसुधारले गर्दा जग्गाको स्वामित्व मोहीमा जानाले गुठीको जग्गा अलपत्र पुग्न गए ।

### ३.५.४.३. आर्यावलोकितेश्वरको लोकगीत

विभिन्न लोकेश्वर करुणामयको गीतहरु रचिए झैं यस मच्छेन्द्रनाथको पनि गीत गाउँदै आएको छ । यस गीतमा 'आर्यावलोकितेश्वरको शरण' भनि गाउने गरेको छ । यसमा करुणामयको बयान गरेको छ । यस गीत कसले कुन बेला लेखिएको थियो भन्ने थाहा छैन । तर जात्राको बेलामा सबैले गाउने गर्दछन् । यस्तै रमाइलो गर्छन् ।[११५]

## ४. उपसंहार

दैनिक जीवनमा नभई नहुने शक्ति दाताको रुपमा मानिने चार करुणामय लोकेश्वरलाई आजसम्म पनि त्यतिकै अगाध भक्ति राखि नेपालीहरुले पूजा गर्दै आएका छन् । सृष्टिकान्त लोकेश्वर (नाला करुणामय) को प्रतापले यस जगतको सृष्टि भइराखेको छ भने सृष्टि भएका सम्पूर्ण प्राणीको जीवन यापन गर्नका लागि अन्नधन्न जलवृष्टि गर्न पद्मपाणी लोकेशवर लोकनाथ (बुंगद्यः) को सृष्टि गरेको छ । यस्तै सृष्टि भएका प्राणीहरुको निरोगीको लागि, बिरामी भएमा विभिन्न भय त्रास आएमा सबै हरण गर्न आनन्दादि लोकेश्वरको (आदिनाथ) सृजना गरेको छ । यस्तै जीवनमा आनन्द आइ आयु साधना गर्न आर्यावलोकितेश्वर (जनबाहाद्यः) को सृजना गरिएको छ । बाऱ्ह महिनामा बाऱ्ह वटा करुणामयको व्रत बस्ने गर्छ भन्ने अर्को १०८ करुणामयहरु छ । यस्तै अरु विभिन्न करुणामय लोकेश्वरमध्ये ३६० करुणामयहरुको मन्त्रोचरण गर्दै आएका छन् ।

नेपालमा धर्म र संस्कृति नङ्ग र मासु झैं नजिकको सम्बन्ध रहँदै आएकोले थरीथरी संस्कृतिको संरक्षण गर्न निकै प्रयास हुँदैन । यहाँ गरीने जात्रामा अनेक धर्म र सम्प्रदायको आदर्श र कर्मकाण्ड मिश्रित भएका छन् । नेवार बौद्ध संस्कारको मूल विशेषता नेवार जाति निकै मिलनसारको स्वभावले धार्मिक सहिष्णुता, सांस्कृतिक परम्परा अगाडि बढेको छ । जुनसुकै देवदेवता चाहे हिन्दू होस या बौद्ध कुनै पनि धार्मिक भेदभाव नगरी परापूर्वकालदेखि शाक्यहरुले चमर हलाई 'वीरन्चीनारायण नमो नमः' भनि स्तोत्र पाठ गर्दै आएका छन् ।[११६]

बौद्ध संस्कृतिको मूल विशेषता नै सम्पूर्ण जीवलाई लोक कल्याणकारी कामलाई सम्झी जात्रा मनाउँदै आएका छन् । जात्रा मनाउने भनेको मनोरञ्जन, भोज खानु, हूल दंगा, गर्नु होइन । पाटनको लोकनाथ होस, काठमाडौंको सेतो मच्छेन्द्रनाथ करुणामयको जात्रा गर्नु भनेको लोक कल्याण गरी जीवनचक्र अगाडि बढाउनु हो । यस किसिमको जात्राका संरक्षणले नै प्रजाहरु र राष्ट्रको रक्षा हुने गर्छ । पूर्वजहरुले निर्माण गरिएको जात्राको महत्वले नै बहुजन हिताय बहुजन सुखाय भइरहेको हुन्छ । सम्पूर्ण नेपालीहरु एकताबद्ध हुनका लागि शुभअवसर दिइरहेको छ । नेपालमा आजसम्म जतिपनि जात्राहरु छन् । यो विश्वको कुनै पनि मुलुकमा नहोला । यो नेपालको संस्कृतिको विशेषता हो । तेतीस कोटी (करोड) देवताहरु रहेको पूण्यभूमिमा हजारौं देवदेवताको जात्रा चलाउनु पर्दछ । यस्तो जात्राले नै नेपालको सांस्कृतिक कार्य जीवित अवस्थामा राख्न सकिएको कारण हो । यस्तो जात्रालाई संरक्षण गर्न नेवार जातिहरु बढी संलग्न भएका छन् । त्यसमा नेवार बौद्धहरु संज्ञानता धेरै देखिन्छ ।

अचेल नेपालीहरुमा धर्मचित्त धमाधम घट्दै गएका छन् । आ-आफ्नो संस्कृतिप्रति बिस्तारै ध्यान दिन छोड्दै आएका छन् । आर्थिक अवस्था कमजोर भएको मानिसमा धर्मकर्ममा मन जान छाड्यो । गुठी चलाउन आयस्ता पनि घट्दै गएछ । भूमिसुधार आएपछि जात्रा चलाउनु पर्ने खेतलाई सरकारले भित्र्याई दियो । अरु जनताले स्वयं देउटाको गुठीका जनताहरु आ-आफ्ना नाममा सारिए । मोहीहरुले बाली तिर्न जान छाडे । यसले गर्दा गुठी मासिदै गयो । जात्राको बेला मान्छेहरुको भेटघाट हुन पनि घट्दै गए । देउटाको रथ तान्नलाई मानिसलाई आह्वान गर्नुपर्ने स्थिति आए । चोभारको आनन्दादिलोकेश्वर र नालाको सृष्टिकान्त लोकेश्वरको जात्रा जमानैमा गर्न नसक्ने भइसक्यो । सरकारले यसको संरक्षणको लागि कुनै चासो राखिएन । जात्रा भनेको नेवारहरुको पेवा जस्तै भयो ।

पहिले-पहिलेका मान्छेहरुमा धार्मिक चेतना थिए । परोपकारको भावना यथेष्ट थियो । नेपालीहरु गुठी, गण जात्रा चाडपर्व भन्नाले निकै श्रद्धा र भक्ति राखि मान्दथे । तर अचेल धार्मिक काममा शिथिलता आयो । आ-आफ्नो कुलायनका कामहरु धमाधम छाड्दै आए । बज्राचार्य शाक्यहरुले आ-आफ्ना विहारमा पालो बस्ने नीति पूजा गर्ने काम छाड्दै ल्याए । आ-आफ्नो पूर्खाका विहारहरु जसलाई पायो उसलाई बेच्न थाले । देउटाको हेरचाह गर्ने मान्छेहरु नहुँदा विहार नै ध्वस्त हुँदै गयो । यी कारणहरुले गर्दा जात्राहरुलाई पनि समयमै संरक्षण गर्नुपर्ने जरुरी छ ।

नेपालीहरुको जनजीवनमा आ-आफ्नो संस्कृतिको निकै महत्व छ । खानु, लाउनु, बस्ने देखिन लिएर जीवनलाई कसरी अगाडि बढाउने भन्ने व्यवहार र संरचनालाई मिलाउँदै आएको छ । आनन्द र मनोरञ्जनका लागि जात्रा चलाउँदै आएको छ । यही जात्राहरुले देशको राष्ट्रियताको संरक्षण गरिरहेको छ । यो देशको सभ्यताको पहिचान गराउँदै आएको छ । आजसम्म युगौंदेखि करुणामयको जात्रालाई जीवन्त दिँदै आएको छ । आजसम्म यस्ता यात्राको अस्तित्व रहन्छ तबसम्म नेपालको संस्कृति र सभ्यता जीवित रहेको हुन्छ ।



# पाद टिप्पणी (Foot Notes)

१. बद्रीरत्न बज्राचार्य, श्री स्वयम्भु पुराण, सानुमाया तुलाधर, पहिलो, काठमाडौं ने.सं. ११०३ पेज ३२ ।

२. मदन सेन बज्राचार्य, महामन्जुश्री नेपालको प्रथम गायक थौकन्हे सं. रेवती रमानन्द, वर्ष ४१, संख्या सम्झना पेज ने.सं. ११३ श्रीपंचमी, पेज ५ ।

३. हेमराज शाक्य, श्री स्वयम्भु महाचैत्य, स्वयम्भू विकास मण्डल, काठमाडौं ने.सं. १०९८, पेज ५ ।

४. डा. बज्रराज शाक्य, गोष्ठीको निष्कर्ष, नेवाः बौद्ध संस्कृति संरक्षण गोष्ठी, वि.सं. २०५४, प्रतिवेदन, लोट्स रिसर्च सेन्टर, ने.सं. १११४, पेज ६ ।

५. मिन बहादुर शाक्य, (सं.), ललितविस्तर सत्र, अ. निष्ठानन्द बज्राचार्य, युवक बौद्ध प्रकाशन, ललितपुर, ने.सं. १०९८, पेज ६०३-६०४ ।

६. अमोघबज्र बज्राचार्य, लोकेश्वरको परिचय, लोकेश्वर संघ नेपाल, ने.सं. १०९९, भूमिका ङ ।

७. मीन बहादुर शाक्य, आर्य गुण कारण्ड व्यूह सत्रः, अ. जोगमुनि बज्राचार्य, नागार्जुन बौद्ध अध्ययन संस्थान ललितपुर, ने.सं. ११७, पेज २७-२८ ।

८. बद्रीरत्न बज्राचार्य, स्वयम्भु पुराण, पेज ४८-५५ ।

९. जगदीश चन्द्र रेग्मी, लिच्छवी संस्कृति, रत्न पुस्तक भण्डार, काठमाडौं वि.सं. २०२६, पेज ३०६-३०७ ।

१०. धनबज्र बज्राचार्य कमल पि मल्ल, दि गोपालराज वंशावली, फ्रान्जस्टेनर भेरलाग विसवेदन, इ. १९८५, पेज ३१ ।

११. जगदीश चन्द्र रेग्मी, लिच्छवि संस्कृति, पेज ३५२ ।

१२. उही ३५३ ।

१३. धनबज्र बज्राचार्य, कमल पि. मल्ल, दि गोपालराज वंशावली, पेज ११३ ।

१४. जगदीश चन्द्र रेग्मी, लिच्छवि संस्कृति, साझा प्रकाशन, काठमाडौं वि.सं.

१५. के.वि. उदय, ललितपुरको बुंगमती देवता जात्राको बारे केही कुरा सन्ध्या टाइम्स, तछलाथो, चौथी, ने.सं. १११८ ।

१६. महेश्वरराज बज्राचार्य, ललितपुरको रथयात्रा, श्रीमती वसन्ती बज्राचार्य ललितपुर, ने.सं. १११३, प्रकाशकीय भूमिका ।

१७. हेमराज शाक्य, स्वयम्भू महाचैत्य, पेज १४ ।

१८. इन्द्रराज बज्राचार्य, रातो मच्छेन्द्रनाथ गोरखापत्र, २०३४।२।१८

१९. उही ।
२०. पं. आशाकाजी बज्राचार्य, बुंगद्य: नेपाले ह:गु खं, ने.सं. १०८७, पेज १ ।
२१. उही ।
२२. जुद्धरत्न बज्राचार्य, श्री संकटा राजकीर्ति महाविहार (टेबहाल) को संक्षिप्त परिचय, सुनकेशरी बज्राचार्य, काठमाडौं, ने.सं. १११७, पेज १ ।
२३. पं. आशाकाजी बज्राचार्य, उही ।
२४. उही ।
२५. पं. बद्रीरत्न बज्राचार्य, स्वयम्भू पुराण, पेज २१४ ।
२६. धनबज्र बज्राचार्य, कमल पि. मल्ल, दि गोपालराज वंशावली, पेज ३१ ।
२७. उही पेज ३४ ।
२८. उही पेज ४८ ।
२९. हरेराम जाशी, हाम्रो संस्कृति, सूचना विभाग, काठमाडौं, वि.सं. २०३७, पेज
३०. उही पेज ७३ ।
डिल्ली रमण रेग्मी, मिडियभल नेपाल, पेज
(तर ने.सं. ७९५ लेखिएको छ ।
३१. हेमराज शाक्य, स्वयम्भु महाचैत्य, पेज १४ ।
३२. जान लाक, करुणामय, सहयोगी प्रकाशन, काठमाडौं, ई.सं. १९८०, पेज ।
३३. उही पेज २६७ ।
३४. उही पेज २६४-२६५ ।
३५. महेश्वरराज बज्राचार्य, उही पेज ६१-६२ ।
३६. जान लाक, उही पेज २६७-२६८ ।
३७. मदन मोहन मिश्र, धार्मिक सहिष्णुताको प्रतीक बुंगमती देवता 'इनाप', वर्ष २ अंक १७, कछलाथो १, ने.सं. ११०४, पेज ४ ।
३८. के.वि. उदय, उही ।
३९. पं. आशाकाजी बज्राचार्य, उही पेज ९५-१०१ ।
४०. उही ८७ ।
४१. के.वि. उदय, उही ।
४२. डि.आर. रेग्मी, उही पेज ३०५-३०६ ।
४३. मदन मोहन मिश्र, उही ।
४४. सत्य मोहन जोशी, नायूखिं खंग्व: प्वलेबलेय् चकना वर्ष ७, अंक ३, ने.सं. ११०८, पेज ८३ ।

४५. मदनसेन बज्राचार्य, उही पेज १३ ।

४६. उही पेज २४ ।

४७. सं. तथा अ. हेमराज शाक्य, करुणामय श्री बुंगमलोकेश्वरको महत्वपूर्ण शिलापत्रया भाषानुवाद, प्र.वा., ललितपुर, धर्मरत्न शिल्पाकार, ने.सं. १११२, पेज १५-१६ ।

४८. छत्रबहादुर कायस्थ, बुंगमती लोकेश्वरया म्ये मुना, पहिलो ललितपुर, साहित्य मुलुखा, ने.सं. ११०२, पेज ३६ ।

४९. श्री आर्यावलाकितेश्वर करुणामय स्तोत्रम् बुंगद्य:या तुत:, तुत: गुथि लुंखुसि, यल । ने.सं. ११११ केही कुरा ।

श्री करुणामय बुंगल लोकेश्वरको स्तोत्र (अर्थ सहित), त्रिरत्न सेवा खल: पाटन, ने.सं. १११२ ।

५०. उही पेज २ ।

५१. उही पेज १० ।

५२. उही पेज ११ ।

५३. उही पेज केही कुरा ।

५४. हेर्नु होला परिशिष्ट १ ।

५५. रत्नकाजी बज्राचार्य, चचामुना, बुद्धिमान, बद्रीमान शाक्य, काठमाडौं, ने.सं. ११६, पेज ५१ ।

५६. उही पेज १२९ ।

५७. डा. प्रेम खत्री, बुंगमती जहाँबाट मनसुनी वर्षाको उद्घोष हुन्छ, मधुपर्क, अंक २६, पूर्णाङ्क २९८, चैत्र २०५०, पेज ४ ।

५८. मदनमोहन मिश्र उही पेज ५ ।

५९. उही पेज ५ ।

६०. उही पेज ५ ।

६१. इन्द्ररत्न बज्राचार्य, मीननाथ, गोरखापत्र, वि.सं. २०३८।४।५

६२. अमोघवज्र बज्राचार्य, लोकेश्वरया परिचय, पेज ८६-८८ ।

६३. धर्मरत्न शाक्य, नेपालको श्रृंगभेरी जात्रामा बजाइने प्रचलित सांस्कृतिक बाजाको परिचय, नेकू जात्रा मतया: श्रृंगभेरी दिपयात्रा स्मारिका, २०५२, ललितपुर, पेज १५ ।

६४. इन्द्ररत्न बज्राचार्य उही ।

६५. उही ।

६६. उही ।

६७. श्री आदिनाथ, आदिनाथ अनुसन्धान विधि, ललितपुर, वि.सं. २०४६, पेज त्र ।

६८. आनन्दादी लोकेश्वर विराजमान भएको चोभार क्षेत्रको स्थलगत अध्ययन पलेस्वां, अं. ११, ने.सं. १११६, पेज १३-१४ ।

६९. उही पेज ।

७०. चन्द्रमान बज्राचार्य, कीर्तिपुर नगरपालिका भित्र प्रमुख पर्यटन स्थलहरु, जनचेतना पुस्तकालय, कीर्तिपुर, पेज ७ ।

७१. आदिनाथ, उही पेज ८ ।

७२. पं. बद्रीरत्न बज्राचार्य, उही पेज २९२-२९३ ।

७३. श्री आदिनाथ, उही १०-११ ।

७४. योगी देवीनाथ, सं. देवमाला, पेज १३३ ।

७५. विक्रम जित हसरत, हिष्टोरी अफ नेपाल, पेज ७३ ।

७६. आदिनाथ, उही पेज १२ ।

७७. सिद्धिहर्ष बज्राचार्य, अभिलेख संग्रह, हस्तलिखित (अप्रकाशित) ।

७८. उही ।

७९. देवी प्रसाद, भाषा वंशावली (भाग द्वितीय), नेपाल राष्ट्रिय पुस्तकालय, काठमाडौं, वि.सं. २०२३, पेज १९ ।

८०. आनन्दादि लोकेश्वर अध्ययन प्रतिवेदन, पलेस्वां, पेज ४० ।

८१. श्री आदिनाथ, उही ११ ।

८२. देवी प्रसाद, भाषा वंशावली, पेज १९ ।

८३. पलेस्वां उही पेज १९ ।

८४. हेर्नुहोला परिशिष्ट ।

८५. रत्नकाजी बज्राचार्य, चचामुना, पेज १३१ ।

८६. वंशिधर बज्राचार्य, जात्राय् म्हुतु ल्याय्गु परम्परा, इनाप, (तपंपौ), ने.सं. ११०८ थिंला । पोहेंला पेज ३६ ।

८७. धनबज्र बज्राचार्य, त्रिरत्न सौन्दर्य गाथा, नेपाल सांस्कृतिक परिषद्, वि.सं. २०२९, पेज ११८ ।

८८. पलेस्वां, पेज १६ ।

८९. हेमराज शाक्य, परम्परा निसें न्ह्याना च्वंगु जात्रा व दे भ्वय्, सन्ध्या टाइम्स, वि.सं. २०५२ फागुन २५, पेज ४ ।

९०. वर्णबज्र बज्राचार्य, नाला करुणामयया परिचय, इन्द्रबज्र बज्राचार्य, भोंत वि.सं. २०२१, पेज १ ।

९१. पं. बद्रीरत्न बज्राचार्य, स्वयम्भु पुराण, पेज ६० ।

९२. वर्णबज्र बज्राचार्य, उही २ ।

९३. अमोघबज्र बज्राचार्य, लोकेश्वर परिचय, पेज ७३-७९ ।

९४. वर्णबज्र बज्राचार्य, उही पेज ३ ।

९५. उही पेज ४ ।

९६. फणीन्द्ररत्न बज्राचार्य, दे थायपा आनन्दमुनि बज्राचार्यया जीवनय छपुलु ।

९७. बज्राचार्य युवा संघ, काठमाडौं, ने.सं. ११११, पेज १०-११ ।

९८. रत्नकाजी बज्राचार्य, चचामुना, पेज ७० ।

९९. धनबज्र बज्राचार्य, जनबाहा द्योया ऐतिहासिक परिचय ।

१००. अमोघबज्र बज्राचार्य, उही पेज ५१-५२ ।

१०१. राजा शाक्य, भाय् व इतिहास जनबहा:, ज: ल्या: ९, ने.सं. १०८३, पेज १७८ ।

१०२. उही पेज १७२ ।

१०३. उही पेज १७० ।

१०४. कमलानन्द बज्राचार्य, श्री करुणामय आर्यावलोकितेश्वर जनबाहाद्योया बाखं, सुवर्ण शाक्य, ओंमबाहा, ने.सं. १०८४, पेज ४-५ ।

१०५. उही पेज १५ ।

१०६. जुद्धरत्न बज्राचार्य, श्री लुंमधि अजिमा भद्रकालीयागु संक्षिप्त परिचय, श्रीमती सुनकेशरी बज्राचार्य, काठमाडौं, नें.सं. १११८, पेज ६ ।

१०७. राजा शाक्य, उही १७५-१७६ ।

१०८. अचेल द्य: गुरुजु मूलाचार्यमा तेजरत्न बज्राचार्य र बेताजु उपाध्याय्मा पं. बद्रीरत्न बज्राचार्य ।

१०९. 'धलिं लुइगु विधि' बारे जनबहालका पुजारी श्री रत्नमुनि बज्राचार्यसंग कुराकानीको आधारमा ।

११०. जान के. लाक, करुणामय, उही पेज २२९ ।

१११. उही २२५ ।

११२. गौतम बज्र बज्राचार्य, विश्वभूमि, स्वतन्त्र विश्व मरुसत्तल, वर्ष १२, पेज ४४-४५ ।

११३. श्री रत्नमुनि बज्राचार्य भनाई अनुसार ।

११४. उही ।

११५. हेर्नुहोला परिशिष्ट ।

११६. जीतबहादुर मानन्धर, विरिन्चिनारायण, श्रीमती तारादेवी मानन्धर, लायकुसाय्, काठमाडौं, वि.सं. २०४६ पेज ८० ।

## साना पुस्तक (Booklet)


१. हिरारत्न स्तोत्र, स्थापित परिवार, ने.सं. १११२ (द्वितीय संस्करण) ।

२. चतुर बौद्ध देवता धार्मिक स्तोत्र समुचय, शाक्य प्रकाशन, ने.सं. १११५ ।

३. श्री आर्यावलोकितेश्वर करुणामयया स्तोत्रम बुंगद्यःया तुतः, पिकाकः तुतः गुथि लुंखुसि यलं । नै.सं. ११११ ।

४. श्रीकरुणामय बुंगम लोकेश्वरया स्तोत्र अर्थसहित, त्रिरत्न सेवा खलः, ने.सं. १११२ ।

५. चार करुणामयया स्तोत्र, पिकाकः हर्ष बहादुर मानन्धर ।


## गोष्ठी (Seminar Paper)


१. आनन्दादि लोकेश्वर विराजमान भएको चोभार क्षेत्रको स्थलगत अध्ययन भ्रमण एक प्रतिवेदन - लोटस रिसर्च सेन्टर, पलेस्वां अंक ११ ने.सं. १११६ ।

२. बज्राचार्य, फणीन्द्ररत्न, नेवाः बौद्ध संस्कृति गुथिको महत्व, लोट्स रिसर्च सेन्टर, पलेस्वां, नै.सं. २०५४ ।

३. बज्राचार्य, रत्नकाजी, नेवाः बौद्ध संस्कृति, साहित्य, शिक्षा, चर्यागीत, नृत्य, व्रत नखःचख आदिको परम्परा, लोट्स रिसर्च सेन्टर, वि.सं. २०४९ ।

४. बज्राचार्य, मदनसेन, नेवाः बौद्ध संस्कृति लोक बाजा । लोट्स रिसर्च सेन्टर, वि.सं. २०५४।१२।१५ ।

५. बज्राचार्य, सिद्धिहर्ष, अभिलेख संग्रह, (अप्रकाशित)

# पत्रपत्रिका (Magazines)


१. उदय, के.वि. ललितपुरको बुंगमती देवता जात्राको बारे केही, सन्ध्या टाइम्स, तछ्ला थ्व चौथी, ने.सं. १११८ ।

२. खत्री, प्रेम, बुंगमती जहाँबाट मनसुनी वर्षाको उद्घोष हुन्छ, मधुपर्क, पूर्णाङ्क २७८, चैत्र २०५० ।

३. जोशी, सत्य मोहन, केही कुरा खोलेर हेर्दा, चकना, वर्ष ७, पेज ३, ने.सं. ११०८ ।

४. बज्राचार्य इन्द्ररत्न, मीननाथ, गोरखापत्र, ४ पौष २०३८ ।

५. बज्राचार्य इन्द्ररत्न, रातो मच्छेन्द्रनाथ, गोरखापत्र, ४ जेष्ठ २०२९ ।

६. बज्राचार्य इन्द्ररत्न, सेतो मच्छेन्द्रनाथ, गोरखापत्र, ९ चैत्र २०३४ ।

७. बज्राचार्य पूर्णहर्ष, जात्रा के हो, सुकुन्दा, ने.सं. ११०८, पेज ९८ ।

८. वैद्य, जनकलाल, बुंगमती देवता जात्राको कुरा भएको किताब, एक अध्ययन, नेपाल संस्कृति, वर्ष ३, अंक १-२, ने.सं. १११२ ।


# सहयोगी पुस्तकको सूची (Bibliography)


१. आदिनाथ अनुसन्धान विधि, श्री आदिनाथ, कुपण्डोल, ल.पु. वि.सं. २०४६ ।

२. कायस्थ, छत्रबहादुर, (सं) बुंगम लोकेश्वरया म्ये मुना, साहित्य मुलुखा, पाटन, ने.सं. ११०२ ।

३. जोशी, हरिराम, हाम्रो संस्कृति, श्री ५ को सरकार सूचना मंत्रालय, काठमाडौं, वि.सं. २०३७ ।

४. रेग्मी, जगदीश चन्द्र, लिच्छवि संस्कृति, रत्न पुस्तक भण्डार, काठमाडौं, वि.सं. २०२६ ।

५. रेग्मी, जगदीश चन्द्र, धार्मिक इतिहास, नेपाल राजकीय प्रतिष्ठान, काठमाडौं, वि.सं. २०२६ ।

६. लम्साल, देवी प्रसाद, भाषा वंशावली (द्वितीय भाग), नेपाल राष्ट्रिय पुस्तकालय, काठमाडौं, वि.सं. २०२३ ।

७. बज्राचार्य, अमोघबज्र, लोकेश्वरया परिचय, लोकेश्वर संघ, काठमाडौं, ने.सं. १०९९ ।

८. बज्राचार्य, आशाकाजी, बुंगद्य: नेपाल ह:ग खं, (वंशावली मणिरत्न माला), आशाकाजी, ने.सं. १०८७ ।

९. बज्राचार्य, गौतमबज्र, हनुमान ढोकाको राजदरबार, नेपाल एशियाली अनुसन्धान केन्द्र कीर्तिपुर, वि.सं. २०३३ ।

१०. बज्राचार्य, धनबज्र, (सं.) त्रिरत्न सौन्दर्य गाथा, नेपाल सांस्कृतिक परिषद्, काठमाडौं, वि.सं. २०२९ ।

११. बज्राचार्य, धनबज्र, (सं.र अ.) लिच्छविकालिन अभिलेख, नेपाल र एशियाली अध्ययन केन्द्र, कीर्तिपुर, वि.सं. २०३० ।

१२. कमल पी. मल्ल, गोपालराज वंशावली, नेपाल रिसर्च पब्लिकेशन ९ ई. १९८५ ।

१३. बज्राचार्य, न्हुच्छेराज, (सं.) मीननाथको वंशावली, रत्नराज बज्राचार्य, ल.पु., वि.सं. २०१९ ।

१४. बज्राचार्य, वर्णबज्र, चोबाहा करुणामयया बाखं, भोंत, इन्द्ररत्न बज्राचार्य, वि.सं. २०३१ ।

१५. नाला करुणामयया बाखं (दीर्घारथानवदान), इन्द्ररत्न बज्राचार्य, भोंत, वि.सं. २०२९ ।

१६. बज्राचार्य, मनबज्र, हाम्रो चाडपर्वको विवेचना, रत्न पुस्तक भण्डार, काठमाडौं, वि.सं. २०२९ ।

१७. बज्राचार्य, महेश्वरराज, ललितपुरको रथ यात्रा, श्रीमती वासन्ती देवी, पाटन, वि.सं. २०५० ।

१८. बज्राचार्य, बद्रीरत्न, स्वयम्भू पुराण (पहिलो), सानुमाया तुलाधर, काठमाडौं, वि.सं. ११०२ ।

१९. अमोघपास लोकेश्वरया व्रतविधि कथा, करुणामुनि बज्राचार्य, काठमाडौं, ने.सं. ११०२ ।

२०. बज्राचार्य, रत्नकाजी, विजयरत्न बज्राचार्य, नेपा: देया विहारया ताचा, काठमाडौं, मंत्रसिद्धि महाविहार, ने.सं. ११०३ ।

२१. चचामुना, बद्रीमान शाक्य, बुद्धिमान शाक्य, काठमाडौं, ने.सं. १११६ ।

२२. शाक्य, मीनबहादुर, (सं.) आर्य गुणकारण्ड व्यूह सूत्र, (भाषा अनुवाद जोगमुनि बज्राचार्य, नागर्जुन बौद्ध अध्ययन संस्थान, ल.पु., ने.सं. १११७ ।

२३. शाक्य, मीनबहादुर (सं.) ललित विस्तर, अनुवादक निष्ठानन्द बज्राचार्य युवक बौद्ध प्रकाशन, ल.पु., ने.सं. १०९८ ।

२४. शाक्य हेमराज, संक्षिप्त आर्यावलोकितेश्वर परिचय, मेघराज शाक्य, ल.पु., ने.सं. १०८० ।

२५. शाक्य हेमराज, स्वयम्भू महाचैत्य, स्वयम्भू विकास मण्डल, काठमाडौं, ने.सं. १०९८ ।
२६. शाक्य हेमराज, (सं.), करुणामय श्री बुंगमलोकेश्वरया महत्वपूर्ण शिलापत्रया भाषा अनुवाद, वि.सं. २०४९ ।

# सहयोगी पुस्तकको सूची (Bibliography)

1. Locke K. John, Karunamaya, C.N.A.S. (T.U.), A.D. 1980.
2. Buddhist Monasteries of Nepal. A Survey of the Bahas and Bahis of the Kathmandu Valley. Sahayogi Prakashan, Kathmandu, A.D. 1985.
3. Regmi, D.R., Medieval Nepal (Part II), A.D. 1966, Kathmandu.
4. Sayami, Dhoosan, The Lotus and the Flame. An Account of Nepalese Culture, Department of Information Ministry of Communication HMG of Nepal, A.D. 1972.

# परिशिष्ट

## लोकनाथको गीत

श्री लोकनाथ शरण:
लोकनाथ याहुने जगत उद्धार (घु)
अरुण ऊन जुस अभिताभ शिरे तसें, अभयवर दान बिसे ।
अनाथया नाथ जुसे अमोघपाश जोसे, आशा नं वया जि अनाथ (१)
कनकया मतुकस कनक केतकि स्वान, कर्णश कनक कुण्डल ।
करुणामय प्रभु करुणा निधानं स्वये जित माल (२)
मणिमय तिलहिल मन उन तेज थिक, मणिमय हारतियान ।
मच्छिन्द्रनाथ मनया स्वरुप, मनोरथ पुरे याये माल (३)
सुन्दर सुलक्षण संयुक्त शोभायमान, सुखावति भुवनया नाथ ।
स्वयप्रभु थो बेलस सुदृष्टिक कनाव, सुखावतिबोना यने माल (४)
रसन हर्षन ललिता पुरस, रथंस दनाब बिज्याक ।
रथ गज रत्न सालया धनी, सुरेन्द्र विक्रम शाहदेव (५)

## आदिनाथको गीत

श्री आनन्दादि लोकेश्वर शरण

कच्छपाल परवत च्वसं वसलपा दिल वस अभिताव शिरतसे ध्यानं (धु) ।
अरुणया वर्णवस हिरामोती माला हमस जाज्वल्यमान व शरीर (१)
लोकसेन फोनावल, धयागुलि बिल छिनं जित छको प्रशन्न जुये माल ।
स्वव स्वव जि पापीया ख्वाल, चायान्यखु हाल थेंहाल, आनन्दादि लोकेश्वर (२)
शरीरस थो व्याधि नं पीडलपा च्वनहमस मृत्युकाल तरे याना बिव ।
अने अने वैद्य क्यना नाना उपचार याना, मग्यल जित उपकार (३)
चान्हं न्हिनं सुमरिपा आनन्दादियाके भक्तियाना जि खनाव दया दयेके माल ।
थुगु दु:ख फुतकिम्ह छलपोल छहम जक खना आशानं वया छिगु भलसानं (४)
अग्निया अवतार नृपति श्री जयवीर श्री जय प्रकाश मल्ल ।
ल्हाकहमया देहदतले निम्ह सिया प्राण च्वंतले याहुने जगत उद्धार (५)

## नाला करुणामय गीत

श्री लोकनाथ शरण

लोकनाथ श्री करुणामय मच्छिन्द्रनाथ नाला देशे रस नं. बिज्याक (धु)
आदि न्हापा सत्ययुगे बुंगस बिज्याकम्ह प्रभु उत्तरापंन्थ साधक वया,
हुरेयाना यन प्रभु नाला देश रसक़ बिज्याक (१)
पुण्यमाता नन्दीमाता बालसुकी नागराज वा वय्का फय वयेका
खुसियागु वा वय्का लखस बिज्याकम्ह प्रभु (२)
नाला द्य:लायात, बुंगयाम्ह पांजुयात भोतयाम्ह जुजुयात,
सपनास क्यन प्रभु लखसनं थकाय्का बिज्याक (३)
वसयागु रप जुल हिमालय तुल्य जुल तेज जुल चन्द्रमाया
तिसाजुल हिरामोतिया जोसा जुल पद्म पलेस्वां नं (४)
ब्रम्हा विष्णु महेश्वर चन्द्र सूर्य सहित नं. अग्नि देव वायुदेव,
लक्ष्मी कुवेर सरस्वती पृथवीमाता सृष्टियाना प्रभु (५)
दु:खी प्राणी हालागु ग्रन्थ प्राणी उद्धार यायूत षटगति धोको प्राणी ।
सुखावति लाये माल थुलि फोना बुद्धं पद लाय्मा (६)

## सेतो मच्छेन्द्रनाथको गीत

धन्य धाये लोकेश्वर प्राणी रक्षा यात रे (धु)
कनक चैत्य न्हयोने तसे, ध्यान मिखां स्वसरे ।
दैव दैत्य नाग यक्ष सकल उद्धार यात रे (१)
अभिताभ शिरे तसे लोक उद्धार यात रे ।
सहस्रहल पलेस्वानं, ज्वनाव बिज्यात रे (२)
नागराजा कोखासे, अभय वर वियाव रे ।
सप्त लोचनी आर्यतारा, जवं खवं तयाब रे (३)
हीरामोती थुसे तया, लुंयागु तिसा तियाव रे ।
स्व स्व किकि स्वये मगाक, वसपोलया तेज रे (४)
अनाथ अज्ञानी जुसे, शरण छपिंथाय् वया रे ।
पाप दक्को नाश प्रभु, रोग शान्त याव रे (५)
ल्हाकम्ह अनाथ जुसे, द्वंगु दको क्षमा रे ।
मनोरथ पुरेयाना विव छल्पोत जगत यात रे (६)

# लेखक परिचय



**नाम** : मुनीन्द्ररत्न वज्राचार्य
**जन्म** : २००९ माघ १७
**जन्मस्थान** : च २-५६८ ठहिटि, झ्वाबहाल, काठमाडौं
**बासस्थान** : स्वयम्भू, बनस्थलि मार्ग
**टेलिफोन** : २७७५९९
**शिक्षा** : एम. ए. राजनीति शास्त्र (त्रिभुवन विश्वविद्यालय)
**सेवा** : उप-प्राध्यापक, वि.सं. २०३५ साल देखि वि.सं. २०३९ सम्म सुपिङ्ग बहुमुखि क्याम्पस, भीमफेदी, मकवानपुर जिल्लामा प्राध्यापन
वि.सं. २०३९ साल देखि हालसम्म ललितकला क्याम्पसमा प्राध्यापन
वि.सं. २०४१ साल देखि वि.सं. २०५६ सालसम्म अमृत क्याम्पसमा (आंशिक) प्राध्यापन
बि. सं. २०५४ साल देखि विश्वशान्ति बौद्ध शिक्षालयमा प्राध्यापन
सन् १९९२ जुलाई देखि सन् १९९३ जुलाई सम्म कम्बोडियामा संयुक्त राष्ट्र संघ स्वयं सेवक (UNV) भई सेवा गरेको, सन् १९९९ जुन देखि सन् १९९९ सेप्टेम्बरसम्म पूर्वी टिमोरमा संयुक्त राष्ट्र संघ स्वयं सेवक (UNV) भई सेवा गरेको ।
सन् २००१ मे २० देखि २००१ सेप्टेम्बर २८ सम्म पूर्वी टिमोरमा स्वयंसेवक (UNV) भइ सेवा गरेको ।
**भ्रमण** : भारत, पाकिस्तान, थाइलैण्ड, कम्बोडिया, मलेशिया, सिंगापुर, इण्डोनेशिया, पूर्वी टिमोर, अष्ट्रेलिया
**कृति** : १. सुथ (निवन्ध संग्रह) नेपालभाषा ने.सं. ११०५
२. नेपाल परिचय वि.सं. २०४८
३. राजनीति शास्त्रको एक परिचय वि.सं. २०४८
४. बज्रयानय् पुलुपालु (धार्मिक) नेपालभाषा (सह-लेखक) वि.सं. २०४८
५. नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वर, वि.सं. २०५८

**विभिन्न पत्रपत्रिकामा अनुसन्धानात्मक लेखहरू प्रकाशन**

शुभकामना प्रिन्टिंग प्रेस
मासंगल्लि, काठमाडौं
फोन: २३२१२४